# जानकारी

*सिद्धाश्रम शक्ति केन्द्र नेपालको प्रचलित कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत् सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राणप्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैँमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ, जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिकनो सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुर्‍याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ ।*

सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित 'गोरक्ष निखिल वाणी' नेपालकै पहिलो आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिका हो । सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप यस पत्रिका २०५६ साल भाद्र महिनादेखि अनवरत रूपमा प्रकाशित भइरहेको छ । काठमाडौँ जिल्ला प्रशासन कार्यालयमा दर्ता भएको यस पत्रिकाको दर्ता नं. ७०/०५६ हो । यो पत्रिका धर्मको नाममा हुने गरेको शोषण, आडम्बर एवं पाखण्डविरुद्ध आवाज उठाउँदै वास्तविक तथ्यलाई जनसमक्ष उजागर गरी आध्यात्मिक जागरणको वातावरण बनाउने कार्यमा सरिक हुँदै आएको छ । प्रकाशनको शुभारम्भदेखि नै अलगै पहिचान एवं अस्तित्व बनाउन सफल यस पत्रिकाले मंत्र, तंत्र, योग, आयुर्वेद, सम्मोहन, ध्यान, वेद, पुराण, उपनिषद् आदिजस्ता ऋषिमुनिहरूद्वारा प्रतिपादित तथ्यहरूको व्यवहारिक एवं वैज्ञानिक पक्षहरूलाई प्रस्तुत गर्दै आइरहेको छ । पत्रिका स्वदेश एवं विदेशमा समेत आफ्ना लाखौँ पाठक एवं प्रशंसकहरूमाझ लोकप्रिय हुँदै गइरहेको छ । वेबसाइटमार्फत् पढ्न पाइने व्यवस्थाले विश्वभर छरिएका लाखौँ नेपालीहरूमाझ पनि प्रिय छ ।

पत्रिकामा प्रकाशित लेख, रचना, विज्ञापन, चित्रादिमा सम्पादक वा प्रकाशकको सहमति हुनु आवश्यक नरहेको पनि जानकारी गराइन्छ ।

## यसभित्र




पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
**सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित**
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-
**पत्रिकाको कार्यालय**
बसुन्धरा, काठमाडौँ, पो.ब.नं. १०५११, २७६०
फोन: ०१-४३८९१५४,
URL: gnv.org.np, Email: info@gnv.org.np

पत्रिकासम्बन्धी कुनै पनि जानकारीका लागि मो. ९८४१३१५८६५ मा सम्पर्क राख्न सक्नुहुनेछ ।

**प्रकाशकको ठेगाना**
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौँ
पो.ब.नं.१०५११, २७६०,
फोन: ४३८९१५४, २१००१५३
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौँ ।

# आफ्नै कुरा

सद्‌गुरुदेवहरुको महान् योजनालाई समाजसमक्ष पुऱ्याउन, सद्‌गुरुदेवहरुका दिव्यतम् वाणीहरुलाई जन जनमा पुऱ्याउन आध्यात्मिक खुराक, आध्यात्मिक यात्रालाई सहज बनाउन सिद्धाश्रम शक्ति केन्द्रले प्रकाशन गरेको गोरक्ष निखिल वाणी १५ औं वर्षमा प्रवेश गर्न सफल भएको छ ।

यस ऐतिहासिक घडीमा यस पत्रिकाको यस गौरवमय पन्ध्रौं वर्षमा प्रवेशको पुनीत घडीलाई गोरक्ष निखिल वाणीले गौरवको अनुभव गरेको छ । सर्वप्रथम त यस इतिहास रच्न गोरक्ष निखिल वाणी केवल केवल गुरुकृपास्वरुप मात्र सफल भएकोले सद्‌गुरुदेवप्रति नतमस्तक हुँदै को टिकोटि नमन अर्पण गर्दछौं ।

यस गोरक्ष निखिल वाणीले विभिन्न उतारचढाव, विभिन्न संघर्षहरुलाई पार गर्दै आजको दिनसम्म निरन्तररुपमा प्रकाशित हुँदै समाजमा गोरक्ष निखिल सन्देश छर्न सफल भएको छ । यस पत्रिकाले नेपालमा नै आध्यात्मिक पत्रिकाको अभावलाई पुरा गरिरहेको छ । एक मात्र आध्यात्मिक अनुसन्धानमूलक मासिकको रुपमा आफ्नो परिचय दिन सक्षम भएको छ । सधैं सदावहार रहने सामग्रीहरु, दिव्य वाणीहरु, साधना, ध्यानका विविधहरुले पत्रिकाको स्तरीयतालाई कायम राखेको पाइन्छ । विविध कठिनाईहरुका बावजुद पनि पत्रिकालाई निरन्तरता दिन सकेकोमा सिद्धाश्रम शक्ति केन्द्रले गर्वको महसुस गरेको छ । यस पत्रिकालाई प्रत्यक्ष, अप्रत्यक्षरुपमा सहयोग गर्ने समस्त शुभ-चिन्तकहरुलाई पनि हार्दिक धन्यवाद दिन चाहन्छौं । प्रबुद्ध लेखक वर्गहरु, विभिन्न क्षेत्रका प्रतिष्ठित साधुसन्त, स्वामी सबैलाई हार्दिक कृतज्ञता ज्ञापन गर्दछौं । समस्त पाठकवर्गलाई एवं पत्रिकाको सदस्य बनेर पत्रिकालाई सहयोग गने र्तपाईंहरु सम्पूर्णलाई, विज्ञापनदाता एवं पत्रिकामा खट्ने टिमलाई पनि हार्दिक धन्यवाद दिन चाहन्छौं ।

परमपूज्य सद्‌गुरुदेवहरुसँग, माताहरुसँग आउँदा दिनहरुमा पनि निरन्तररुपमा यस पत्रिकालाई दिव्यतमरुपमा निकाल्न सकियोस्, हजुरहरुको महान् योजनामा यस पत्रिकाको माध्यमबाट पनि गौरवमय भूमिका निर्वाह गर्न सकियोस्, पत्रिकाको उत्तरोत्तर प्रगति हुँदै जाओस् भन्ने प्रार्थना गर्दछौं ।

यस पत्रिका तपाईंहरुको आफ्नै पत्रिका हो । यसैले, यस पत्रिकालाई अझ बढी पठनीय बनाउन तपाईंहरुको सल्लाह, सुझाव, प्रतिक्रियाको आशा राख्दछौं । अन्तमा, यस अंकलाई गौरवमय पन्ध्रौं वर्षको रुपमा प्रकाशित गरेका छौं । पत्रिकाको लागि शुभकामना आदि समेटेर प्रकाशित यस अंकमा भए गरेका कमी-कमजोरीका लागि परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष र यहाँहरुसँग पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह सुझावको अपेक्षा राख्दछौं । अस्तु ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानवजीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...' को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यासजीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यासजीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौँ पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योगमार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकताअनुसार आफै प्रकट हुनुहुने महायोगी अजर-अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नै पर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँका सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

# शुभ–कामना

गोरक्ष निखिल वाणी, आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक, पन्ध्रौँ वर्षमा प्रवेश गर्न लागेको थाहा पाउँदा ज्यादै खुशी लागेको छ। म यस पत्रिकाको उत्तरोत्तर उज्ज्वल भविष्यको लागि हार्दिक शुभ–कामना व्यक्त गर्दछु।

स्वामी रामानन्द गिरी

**स्वामी रामानन्द गिरी**
पशुपति

# शुभ–कामना

गोरक्ष निखिल वाणी अनुसन्धानमूलक मासिक पत्रिका सिद्धाश्रम शक्ति केन्द्रद्वारा विगत १४ वर्षदेखि अनवरतरूपमा प्रकाशन गरेर प्रत्येक समाजमा आध्यात्मिक ऊर्जाको सागर उर्लाउँदै बगिरहेको जानकारी पाउँदा मलाई ज्यादै नै हर्ष, उल्लास लागेको छ र यसबाट मनमै हर्षको गंगा उर्लेको छ।

उक्त पत्रिकाको प्रकाशन र आध्यात्मिक ऊर्जाबाट समाजमा नयाँ परिवर्तन छाउन सकोस्, यही मेरो शुभकामना छ।

**पशुपति बाबा**
अन्नपूर्णा भण्डार
पशुपति

# शुभ–कामना

सनातन हिन्दुधर्मका बहुमुखी शाखाहरूमध्ये तन्त्रले एक विशेष भूमिका खेलेको छ । तन्त्र शब्दको अर्थ त+त्र । त शब्दको अर्थ जडता र अज्ञानता त्र को अर्थ मुक्ति वा छुट्कारा हो । अर्थात् मनुष्यलाई शारीरिक, मानसिक र आध्यात्मिक जडता र अज्ञानताबाट मुक्ति दिलाउने वैज्ञानिक पद्धतिलाई नै तन्त्र भनिन्छ । तन्त्रविद्या विशेष गरी विविध क्रियामाथि आधारित छ । अद्वैतवादी विद्यान्तवादी स्वयं आचार्यज्यू शंकरले पनि व्यक्त गर्नुभएको छ कि तन्त्रमा भएका १ लाख क्रियाहरूमध्ये सबै क्रियाहरू फलप्रद र सत्य हुन् । यो मनुष्यका विचार उद्देश्यमा भर पर्ने गर्दछ । मुक्ति चाहनेले तन्त्रबाट मुक्ति पनि पाउँछ भने भुक्ति खोज्नेहरूले भुक्ति पनि पाउँछ । आधुनिककालमा तन्त्र विषयमा नाना किसिमका द्वन्द्वात्मक र शंकात्मक भावना देखिन्छ । हाम्रो विचारमा जनताभित्र भएका यी अकारण द्वन्द्व मेटाएर तन्त्रबाट जनताले फाइदा लिने तत्त्वहरूमा उत्साहित गर्नुपर्दछ ।

खासगरी नेपाल, तिब्बत, बंगाल, आसाम र उडीसा तन्त्रप्रधान राष्ट्रहरू र क्षेत्रहरू हुन् भन्ने प्राचीन शास्त्रमा भेटिन्छन् । कामख्या तन्त्रको एकादश पटलमा पार्वतीले शिवलाई तन्त्र र योग साधना गर्ने सबैभन्दा उत्तम ठाउँ पीठ वा सिद्ध ठाउँ कहाँ कहाँ हो भनी सोद्धा शिवजीले उत्तरमा 'नेपालम् च महापीठम्' भनी सर्वप्रथम नेपालको नाम नै उल्लेख गर्नुभयो । भनाइको तात्पर्य नेपालमा भक्ति वैराग्य भएको साधकले साधना गर्दा आशुतोष भगवान् शंकरले चाडै सिद्धि प्रदान गर्नुहुन्छ । अरू ठाउँमा सिद्धि पाउन दश जन्म लाग्छ भने नेपालमा एक जन्ममै सिद्धि प्राप्त गर्न सकिन्छ ।

सिद्धाश्रम शक्ति केन्द्रले विगत १४ वर्षदेखि पत्रिका मन्त्र, तन्त्रसम्बन्धी गोरक्ष निखिल वाणी तथा विविध क्रियाकलापको माध्यमबाट तन्त्रविद्याको प्रचारमा लागिरहेको देखिन्छ । सही ढंगले यो प्रचार हुन सक्छ भने जनता यसबाट अवश्य नै लाभान्वित हुन जान्छ । यसैले यस पत्रिकाको उत्तरोत्तर प्रगतिको कामना गर्दै यसमा हाम्रो पनि हार्दिक शुभेच्छा छ ।

**स्वामी चन्द्रेश**

बुढानीलकण्ठ आश्रम, बुढानीलकण्ठ

# शुभ–कामना

**श्री सिद्धाश्रम शक्ति केन्द्र नेपालद्वारा २०५६ साल भाद्र महिनादेखि अनवरतरूपमा प्रकाशित हुँदै आएको परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज तथा नेपालीहरूको स्वाभिमान-गौरवका प्रतिमूर्ति श्री गुरु गोरक्षनाथको असीम अनुग्रह र मार्गनिर्देशनमा आध्यात्मिक युगको पुनर्निर्माणको पुनीत लक्ष्यमा अग्रगमनशील पत्रिका 'गोरक्ष निखिल वाणी' धर्मका नाममा समाजमा चलेका शोषण, आडम्बर, पाखण्डको विरुद्धमा सिंहनाद गर्दै तन्त्र, वेद, पुराण, उपनिषद्, आयुर्वेदहरूका वैज्ञानिक तथा धार्मिक पक्षहरूलाई स्पष्ट पार्दै भविष्यका दिनहरूमा निरन्तर गतिशील भैरहोस्, जसबाट मार्ग विराएका लाखौं व्यक्तिहरूले सही मार्ग अपनाएर जीवनपथमा अघि बढुन्, आफ्ना ग्रन्थहरू र संस्कृतिहरूमा गौरव प्रतिष्ठाको अनुभूति गरून् भनी पत्रिकाको पन्ध्रौं वर्ष पुगेकोमा शुभकामना प्रकट गर्दछु ।**

**योगी नित्यानन्द,**

काठमाडौं ।

दिनाङ्क २०७०।५।१

# गोरक्ष निखिल वाणीलाई अनन्त शुभ-कामना !

*–प्रा. शिवगोपाल रिसाल*

नेपालका आध्यात्मिक पत्र-पत्रिकाको इतिहास त्यति लामो छैन । कति धार्मिक/आध्यात्मिक पत्रिका निस्किए, केही काल चले पनि तर केही समयपछि कराल कालका जालमा कवलित भए अर्थात् बिलाए । यसरी कोही व्यक्ति वा संस्थाबाट कुनै उत्साह र जाँगरमा प्रकाशित भएका आध्यात्मिक पत्रिका बीचैमा बन्द हुनुका दुई प्रमुख कारण छन्– १) आर्थिक अभावको कारण २) प्रकाशक/सम्पादक आदिको उत्साहको अभाव वा शिथिलता ।

सामान्यतया धार्मिक/आध्यात्मिक पत्रिकाको बजार छैन । पैसा तिरेर किन्दैनन्– धार्मिक/आध्यात्मिक मान्छेहरू कति त सित्तैं पाए पनि पढ्दैनन्, कति त बुझ्दैनन् पनि । क्रयशक्ति नभएको भने होइन । अन्य साहित्यिक वा व्यङ्ग्यप्रधान आदि पत्रपत्रिका वा पुस्तकै पनि किनेर पढ्ने धेरै छन् । अझ युवा पुस्तामा पढ्ने प्रवृत्ति बढेको छ । तर धार्मिक/आध्यात्मिक क्षेत्रमा भने पाठकको असाध्य कमी छ । यस्तो धार्मिक र आध्यात्मिक एवं वैचारिक संकटका बेलामा समेत 'गोरक्ष निखिल वाणी'ले आफ्नो पन्ध्र वर्षको इतिहास कुनै कष्ट नभोगिकन, निर्वाधरूपमा, नियमितरूपमा, निर्विघ्नतापूर्वक पार गरेकोमा हामी अध्यात्मप्रेमी सबैलाई अत्यन्त हर्षको अनुभव भएको छ ।

सिद्धाश्रम शक्ति केन्द्रबाट वि.सं. २०५६ साल भाद्र महिनादेखि प्रकाशित 'गोरक्ष निखिल वाणी' आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिकाले नियमित प्रकाशित भएर यस क्षेत्रमा एउटा नयाँ कीर्तिमान नै कायम गरेको छ । प्रत्येक अङ्क कुनै न कुनै विशेषरूपमा प्रकाशित गर्नु अर्को महान् उपलब्धि हो । सबै अङ्क अनुसन्धानमूलक छन् । जस्तै पशुपति विशेष, साधना विशेष, नाथ विशेष, दुर्गा-लक्ष्मी विशेष आदि । कुनै अङ्क पनि ४८ पृष्ठभन्दा कम छैन बरू कुनै कुनैमा पृष्ठ बढेकै छ, घटेको छैन । सबै अङ्क रङ्गिन छपाइ, फोटोहरूले सजिएको, शुद्ध, सुन्दर छपाइ– स्तम्भ लेखहरू, उपयोगी सूचनाहरू, आध्यात्मिक सामग्रीहरूले सजिएका लेखहरूले चिन्तनका लागि प्रशस्त खुराक पस्केका छन् ।

यसरी सर्वाङ्गपूर्ण तन्त्र, मन्त्र र यन्त्रले भरिएका यी लेखहरूले हाम्रो वैदिक परम्पराको एउटा तान्त्रिक पाटोलाई राम्ररी उजागर गरेका छन् । संस्थाको मुखपत्र भएकाले संस्थाको दैनिक, साप्ताहिक, मासिक, वार्षिक हर प्रकारका गतिविधि, घटना, समारोह, पूजाआजा, तीर्थ, व्रत, उपासना, यज्ञ, हवन, साधना आदि इत्यादि सूचना र घटनाको विस्तृत जानकारी पाइनु अर्को विशेषता हो । जसरी आगम पक्षलाई यसले राम्ररी समेटेको छ त्यसरी नै निगम पक्षलाई पनि समेट्न सकेको भए सुनमा सुगन्ध हुने थियो । वेदान्तपक्ष, आध्यात्मिक चिन्तनपक्ष, आत्मानुसन्धानपक्ष, ब्रह्मात्मबोधपक्ष अनि संक्षेपमा भन्नु पर्दा पारमार्थिकपक्षलाई समेत समेटेर सामग्रीहरू दिन सके असाध्य राम्रो हुने थियो ।

'गोरक्ष निखिल वाणी'को अर्को अत्यन्त उल्लेखनीय विशेषता हो– यहाँ सम्पादक गोप्यरूपमा बसेर सेवा गरिरहेका छन् । अब त पन्ध्र वर्षको गुप्तवास, गोप्यनिवासमा बसेर गरेको तपस्या पूर्ण भयो होला । दिव्य बाह्र वर्ष पूर्ण भइसकेकाले सम्पादकज्यूको दर्शन (प्रकाशित भएर) बाहिर देख्न पाए पाठकहरूको लामो प्रतीक्षाले साकार हुने सौभाग्य पाउने थियो । हुन त यो पनि गोप्यदान हो, बौद्धिक दान हो– यसको आफ्नो ठाउँमा असाधारण महिमा पनि छ । यसमा यसरी समर्पित भएर सर्वात्मभावले सेवापरायण, अध्यात्मपरायण भएर यत्रो कालसम्म अनवरतरूपमा लागिपर्नु महान् त्याग हो, तपस्या हो, साधना हो । यसबाट अवश्य पनि कल्याण भएकै हुनुपर्छ ।

प्रकाशक संस्थाप्रति, प्रकाशित सामग्रीप्रति, प्रकाशनमा समर्पित सामूहिक जनशक्ति, मनशक्ति, धनशक्ति र आध्यात्मिक शक्तिप्रति र अन्त्यमा सम्पादकहरूप्रति गोरक्ष निखिल वाणीका सम्पूर्ण परिवारप्रति धेरै धेरै धन्यवाद ! साधुवाद ! गोरक्ष निखिल वाणीले आजसम्मको साधना र तपस्याबाट आर्जन गरेको जुन असाधारण कीर्तिमान छ, त्यसलाई अक्षुण्य र अमर बनाउन हाम्रा सम्पूर्ण देवदेवीले शक्ति प्रदान गरून् र वाणी अमर बनोस्, अद्वितीय बनोस्, अज्ञ आध्यात्मिक (लौकिक र पारलौकिक दृष्टिमा) बनोस् ! यसले नेपाल राष्ट्रको आध्यात्मिक जागरण अभियानमा असाधारण सफलता प्राप्त गरोस्– यही अनन्त शुभकामना छ ।

शिवमस्तु !

शिव-मन्दिर'
शान्तिकुना, थसिखेल
ललितपुर-५

२०७०।५।५।
जनै पूर्णिमा, रक्षाबन्धन महोत्सव

# गोरक्ष निखिल वाणीको गौरवमय

सद्गुरुदेवहरूको महान् योजनालाई मूर्तरुप दिन सिद्धाश्रम शक्ति केन्द्रले आफ्नो स्थापनाकालदेखि नै भरपूर कोशिश गर्दै आइरहेको छ । श्री श्री महायोगी गुरु गोखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई आफ्नो परमाराध्यदेवको रुपमा, आफ्नो प्यारो सद्गुरुको रुपमा मानेर अगाडि बढेको यस संस्थाले उहाँहरूको महानता, दिव्यता एवं उच्चतालाई समाजमा फैलाउन, उहाँहरूको सन्देश समाजसमक्ष पुऱ्याउन, सद्गुरुको अभावमा आध्यात्मिक संसारमा अगाडि बढ्न नसकेकाहरूका लागि सद्गुरुसँग जोड्न, ध्यान, साधना, योग, आयुर्वेदलगायतका विविध विषयमा समाजलाई जानकारी दिने महान् लक्ष्यका साथ २०५६ साल भाद्र महिनादेखि यस केन्द्रले गोरक्ष निखिल वाणीको प्रकाशन आरम्भ गऱ्यो । शुरुमा संस्थाको मुखपत्रको रुपमा चार पृष्ठबाट शुरु भएको यस पत्रिकाले दुई महिनामा नै विशेषांकको रुपमा विशेष अंक निकालेर पत्रिकाको स्तरीयतालाई उच्चतामा पुऱ्याउन सफल भयो । समाजमा आध्यीत्मिक पत्रिकाको अभावलाई परिपूर्ति गर्दै आध्यात्मिक अनुन्धानमूलक मासिकको रुपमा यस पत्रिकाले आफ्नो स्तरीयतालाई कायम राख्दै समाजमा एक लोकप्रिय पत्रिकाको रुपमा आफ्नो परिचय दिन सफल भयो । सदस्य बन्नेहरूको संख्या पनि वृद्धि हुँदै गयो, पसल पसलमा गोरक्ष निखिल वाणी पत्रिका खोज्नेहरूको पनि संख्या बढ्दै गयो ।

टोल टोल, गल्ली गल्ली, भित्ता भित्तामा 'गोरक्ष निखिल वाणी खोजी खोजी' पढौं भन्ने विज्ञापनबाट पनि पत्रिकाको नाम सबैको मन मस्तिष्कमा झुण्डिएको पाइयो । पत्रिकाको नाम नसुन्ने कमै व्यक्ति मात्र पाइन्छ । ०५९ सालमा त संस्थाले जनमानसमा प्रत्यक्षरुपमा सम्पर्क मा जान सकियोस्, गुरुवाणीलाई जन जनमा सुनाउन सकियोस् भनेर एफ.एम. रेडियो मार्फत् आफ्ना कार्यक्रमहरू अघि सार्न शुरु गऱ्यो । एफ.एम. कार्यक्रम छाटो समयमा नै लोकप्रिय बन्न पुग्यो, यसले चर्चाको शिखर छुन थाल्यो, आध्यात्मिक खुराकले भरिएको, मन्त्र तन्त्रसम्बन्धी एक मात्र रेडियो कार्यक्रम 'गोरक्ष निखिल सन्देश'मार्फत् समाजमा आफ्नै पहिचान दिन

# १५ औँ वर्ष

सफल भयो, हजारौँ व्यक्तिहरूलाई सद्गुरुदेवहरूसँग जोड्न सफल भयो । रेडियो कार्यक्रममार्फत् पनि गोरक्ष निखिल वाणीलाई जन जनमा पुऱ्याइयो । यस पत्रिकाको बारेमा रेडियोमा, एफ.एम. मा, टि.भि. कार्यक्रमहरूमा पनि चर्चा हुन थाल्यो । विभिन्न संघसंस्थाहरूमा, कार्यालयहरूमा, पसल पसलमा, घर घरमा, टोल टोलमा गोरक्ष निखिल वाणीको उत्तरोत्तर प्रगति हुँदै गयो, दसौँ हजारभन्दा बढी सदस्य संख्याको विस्तार हुन थाल्यो, हजारौँ व्यक्तिहरूसमक्ष यस पत्रिकालाई व्यापक गरियो । पत्रिकाको लोकप्रियता आफ्नो ठाउँमा बढ्दै गयो । तर पनि एक आध्यातिमक पत्रिकालाई निरन्तररुपमा प्रकाशन गर्नु आफैँमा कम चुनौतीपूर्ण छैन । समाज अति भौतिकतातर्फ बढिरहेको छ, मनोरञ्जनात्मक पत्रपत्रिकाहरू पढ्नेहरूको जमातमा, राजनैतिक विषयवस्तुहरूमा रम्ने जमातमा, एउटा आध्यात्मिक पत्रिकालाई समाजमा स्थापित गराउनु आफैँमा अकल्पनीय नै थियो, ठूलो संघर्ष र चुनौती थियो, थुप्रै गाह्रा, अप्ठ्याराका भीमकाय पर्खालहरू थिए, तैपनि संघर्षहरूसँग लड्दै, भिड्दै गोरक्ष निखिल वाणी आफ्नो ऐतिहासिक वसन्तहरू पार गर्दै आजको किशोर अवस्थामा पुगेको छ । सिद्धाश्रम शक्ति केन्द्र पनि गर्वित भएको छ कि आफ्नो प्रकाशनले एउटा आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको रुपमा आफ्नो गौरवमय चौध वर्ष पार गरी पन्ध्रौँ वर्षमा प्रवेश गरेको छ । गोरक्ष निखिल वाणीको यस ऐतिहासिक घडीमा हामी सबै गर्वित भएका छौँ कि गुरुकृपा, आशीर्वाद भयो भने कुनै पनि असम्भव रहेनछ ! चाहिने रहेछ केवल निरन्तरता, धैर्य, जागरुकता, गुरुप्रतिको अटुट श्रद्धा, साथमा नटुट्ने (दरिलो) विश्वासको खम्बा ।

आज यी सबै चीजहरूले नै गोरक्ष निखिल वाणीले आफ्नो गौरवमय चौध वर्ष पूरा गर्न सकेको छ । यस पुनीत अवसरमा गोरक्ष निखिल वाणीलाई माया गर्ने, सहयोग गर्ने, शुभचिन्तक आदि सबैलाई हार्दिक आभार प्रकट गर्दछौँ । साथै गुरुकृपा, आशीर्वाद प्राप्त होस् भन्ने प्रार्थना गर्दछौँ ।

जय गुरुदेव !

सिद्धाश्रम शक्ति केन्द्र पनि गर्वित भएको छ कि आफ्नो प्रकाशनले एउटा आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको रूपमा आफ्नो गौरवमय चौध वर्ष पार गरी पन्ध्रौँ वर्षमा प्रवेश गरेको छ । गोरक्ष निखिल वाणीको यस ऐतिहासिक घडीमा हामी सबै गर्वित भएका छौँ कि गुरुकृपा, आशीर्वाद भयो भने कुनै पनि असम्भव रहेनछ ! चाहिने रहेछ केवल निरन्तरता, धैर्य, जागरुकता, गुरुप्रतिको अटुट श्रद्धा साथमा नटुट्ने (दरिलो) विश्वासको खम्बा ।

# गोरक्ष निखिल वाणी

# विविध रूपमा

समयको रफ्तारसँगै यस गोरक्ष निखिल वाणीले आफ्ना चौध वसन्तहरू पार गरी पन्ध्रौँ वर्षमा प्रवेश गरेको छ । यस गौरवमय पन्ध्रौँ वर्ष प्रवेशको पुनीत अवसरमा सद्‌गुरुदेवहरूप्रति नतमस्कत हुँदै कोटिकोटि नमन अर्पण गर्दछौँ । गुरुकृपा, आशीर्वाद विना न त पत्रिका प्रकाशन सम्भव छ, न त निरन्तरता नै । सद्‌गुरुको कृपास्वरुप उहाँहरूकै वाणीलाई जन जनमा पुऱ्याउने महान् लक्ष्यका साथ यस गोरक्ष निखिल वाणी आफ्नो लक्ष्यमा गतिशील भई नै राखेको छ, निरन्तररुपमा गुरुरुपी ज्ञान गंगालाई समाजमा सिंचित गर्न लागि परिरहेको छ ।

समाज अलि रूखो छ, अलि भौतिकताको चरम तापले सुकेको छ, मरुभूमिजस्तो बनेको छ, तैपनि ज्ञानरुपी गंगाको रुपमा यस गोरक्ष निखिल वाणी आफ्नो गतिमा अगाडि बढेकै छ, रूखो, मरुभूमि नै भए पनि समाजमा जल छर्केर शीतलता दिइनै रहेको छ । यस ज्ञंगारुपी ज्ञानमा कतिले शीतलताको अनुभव गरे, कतिले नुहाए, कति चुर्लुम्म डुबे, यसको कुनै लेखाजोखा छैन, गोरक्ष निखिल वाणीसँग यसको कुनै हिसाबकिताब छैन, यसको काम त केवल ज्ञानगंगा बनेर समाजमा फैलनु हो, समाजका कुना कुनामा पुग्नु हो, क-कसले फाइदा लिन्छन्, क-कसले आफूलाई पवित्र बनाउँछन्, यसको कुनै सरोकार छैन । हुन पनि एउटा निरन्तररुपमा बगेको नदीमा कतिले पानी पिउलान्, कतिले नुहाउलान्, क-कसले के के फाइदा लिन सक्छन्, यो व्यक्तिमा भर पर्ने कुरा हो, मुख मात्र धुने कि नुहाउने कि, खेतबारीमा सिंचाई गर्ने कि आदि आदि अवसरहरूको सदुपयोग व्यक्तिमा निर्भर गर्दछ । त्यस्तै, यस पत्रिका पनि ज्ञानरुपी नदी बनेर विभिन्न स्थानमा, विभिन्न समाजमा सिंचित गरिरहेको छ । यसलाई कसरी उपयोग गर्ने भन्ने कुरा व्यक्तिमा भर पर्दछ । कतिले बाहिरी कभरलाई ढोगेर मात्र बसे होलान्, कतिले यसभित्रका दिव्य वाणीलाई व्यवहारमा उतारे होलान्, कतिले साधना, ध्यान गरेर जीवनको मार्ग खोजे होलान्, आध्यात्मिक गुढ रहस्यलाई खोतल्दै अगाडि बढे होलान्, कतिले योग र आयुर्वेदलाई अंगालेर शरीरलाई स्वस्थ बनाए होलान्, कतिले मन्त्रजप, हवन आदि गरेर आफ्नो समस्याको समाधान गरे होलान्, दैवीशक्तिको दिव्यताको अनुभव गरे होलान् । आध्यात्मिक संसारमा कसरी अगाडि बढ्ने, अगाडि बढ्नको लागि के गर्नुपर्छ, कसलाई गुरु मान्ने, के साधना, ध्यान गर्ने आदि कौतुहलता, जिज्ञासा राख्नेहरू स्पष्ट मार्ग नभेट्नेहरूलाई पनि यो पत्रिका दिव्य संजीवनी बनेको कैयौँ उदाहरणहरू छन् । सैयौँ, हजारौँ व्यक्तिहरू सद्‌गुरुदेवहरूसँग जोडिन पाएका छन्, सद्‌गुरुदेवसँगको मिलनसँगै नयाँ जीवन पाएका छन् । जीवनका प्रत्येक मोडहरूमा, जीवनका पाइला पाइलाहरूमा सद्‌गुरुदेवहरूको साथ पाइरहेका छन् ।

यसरी हेर्दै जाँदा गोरक्ष निखिल वाणी समाजलाई सद्‌गुरुदेवसँग जोड्ने पुल बनेको छ, सैयौँ हजारौँ व्यक्तिहरूको आस्थाको, श्रद्धाको केन्द्र बनेको छ, गुरुकृपा, आशीर्वादको माध्यम बनेको छ । कहिल्यै पुरानो नहुने ज्ञानरुपी गंगाहरूको संग्रहको रुपमा समुन्द्र बनेको छ । द्वापरयुगको गीताजस्तो कलियुगको गीता बनेको छ, दिव्यशक्ति प्राप्तिको माध्यम बनेको छ, सद्‌गुरुदेवहरूको महान् योजनालाई मूर्तरुप दिने माध्यम बनेको छ, सबैको घर घर, अफिस अफिस पुगेर झकझकाउने, प्रेरणा दिने, गोरक्ष निखिल सन्देश दिने, उठ, जाग, भरपर्दो शिष्य बन, गुरु योजनामा अझै खट अगाडि बढ भनेर आदि इत्यादि सन्देश दिने गोरक्ष निखिल सिपाही बनेको छ । जीवित, जाग्रत गुरुतत्त्वको स्पष्ट उपस्थितिको प्रमाण बनेको छ ।

यस्तो दिव्यताले, गुरुतत्त्वले, गुरुकृपा, आशीर्वादले

**आफ्ना परम आदरणीय सद्गुरुदेवहरूको दिव्य वाणीहरुले भरिएको, दिव्य सन्देशहरुले सजिएको यस गोरक्ष निखिल वाणी धेरैका लागि गुरूकृपाको माध्यम बनेको छ ।**

भरिएको गोरक्ष निखिल वाणीले किशोर अवस्था पार गरेको छ । यस्तो संग्रहणीय पत्रिकाको तपाईँ पनि सदस्य बन्ने, यसका पुराना अंकहरू संग्रह गर्ने होइन त ?

**गुरुकृपा र गोरक्ष निखिल वाणी :**

आफ्ना परम आदरणीय सद्गुरुदेवहरूको दिव्य वाणीहरूले भरिएको, दिव्य सन्देशहरूले सजिएको यस गोरक्ष निखिल वाणी धेरैका लागि गुरुकृपाको माध्यम बनेको छ । आफ्ना विगतका जन्म एवं यही जन्ममा गरेका नराम्रा कर्महरूलाई पखाल्ने माध्यम बनेको छ गोरक्ष निखिल वाणी । यसभित्रका दिव्य चीजहरूलाई ग्रहण गर्दै व्यवहारमा उतारेर पनि गुरुकृपा प्राप्त गर्न सकिन्छ भने गुरुको सन्देश बोकेको दिव्य पत्रिका भएकोले गुरुकार्यमार्फत् गुरुकृपा प्राप्त गर्न सकिन्छ । गुरु नपाएर, आध्यात्मिक मार्गमा अघि बढ्न नसक्नेहरूका लागि, साधना, ध्यान, पूजन, हवन आदि गर्न चाहेर पनि मौका नपाउनेहरूका लागि यो पत्रिका आफैँमा अमृत बन्न सक्छ, मार्ग-निर्देशक बन्न सक्छ, जीवनलाई बाटो देखाउने मार्ग बन्न सक्छ, दु:ख, कष्ट, पीडामा छट्पटाइरहेकाहरूलाई मलम लगाइदिन सक्छ, दैवीकृपा, आशीर्वादको ढोका खोलिदिन सक्छ । यसैले, यस्ता थुप्रै गुणै गुणले भरिएको यस गोरक्ष निखिल वाणीलाई जन जनमा पुऱ्याउनु तपाईं हाम्रो पनि दायित्व, कर्तव्य हुन आउँछ । तपाईंको माध्यमले कसैले सद्गुरु प्राप्त गर्न सक्छन् भने दु:ख कष्टमा अल्झेकाहरूले यसबाट पार पाउने मार्ग प्राप्त गर्न सक्छन्, यी सबैको श्रेय तपाईँले पनि प्राप्त गर्नु हुनेछ । कसैको उन्नति प्रगतिको माध्यम विधाताले तपाईँलाई पनि बनाउन सक्छन् । त्यसैले, यस्तो दिव्य पत्रिका आफूले पनि पढ्ने, अरू अरूलाई पनि सदस्य बनाई पढ्ने अवसर प्रदान गरौँ, गुरुकार्य गरौँ, सद्गुरुको कृपा, आशीर्वाद प्राप्त गरौँ ।

जय गुरुदेव !

## आरती संचालन केन्द्र खुदीको एतिहासिक कार्यक्रम

# शिव साधना एवं आश्रम भवन उद्घाटन समारोह

परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पा एवं आशीर्वादले सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको आफ्नै गोरक्ष निखिल आरती भवन निर्माण भएको छ। गत श्रावण १४ गते सोमबारको शुभ दिन शिव साधनासहित आश्रम भवन उद्घाटन भएको हो । एक भव्य समारोहका बीच सम्पन्न उक्त कार्यक्रमको पहिलो दिन बिहानै शोभायात्रा निकालिएको थियो । कलशसहितको शोभायात्राको भव्यता सबैको आकर्षणको केन्द्र बनेको थियो ।

शोभायात्रापछि कार्यक्रमको शुभारम्भ गर्नुहुँदै सावरपन्थी तथा केन्द्रीय संयोजक रामजी अर्याल एवं सावरमातृका तथा केन्द्रीय संयोजक बिन्देश्वरी बरालज्यूले संयुक्तरुपमा आश्रम भवनको उद्घाटन गर्नुभएको थियो। उक्त अवसरमा गोरक्ष निखिल वाणीको खुदी आश्रम विशेष अंकको विमोचन पनि भएको थियो ।

कार्यक्रममा पूजन, हवन, भजनकीर्तन, लक्ष्यदीप अर्पण आदि सम्पन्न भएका थिए । उक्त कार्यक्रममा विभिन्न व्यक्ति तथा व्यक्तित्वहरूले आफ्नो भनाइ राख्नुभएको थियो ।

कार्यक्रमबाट नयाँ व्यक्तिहरू सद्गुरुदेवहरूसँग नजिकिन पाएको सहभागीहरूको भनाइ रहेको छ। कार्यक्रममा केन्द्रलगायत भक्तपुर, ललितपुर, गोरखा, मध्यपुर ठिमी, पर्सा आदि ठाउँबाट र लमजुङ, तनहुँ, कास्कीका आठवटै आश्रमबाट साधकसाधिकाहरूको सहभागिता रहेको थियो ।

कास्की जिल्ला लेखनाथ न.पा. वडा नं. १२ खुदी ढुंगेपाटन वरालथगर, गगनगौंडा, पावरहाउस, रामबजार आदि ठाउँबाट जस-जसले जे-जसरी सक्नुभयो, त्यसैगरी प्रेम, सद्भाव र सहयोग

गर्नुभयो। यसरी लेखनाथ-१२ खुदीमा एउटा आध्यात्मिक दियो बाल्ने संस्थाको आफ्नै भवन निर्माण सम्पन्न भएको छ। यस सुखद क्षणमा यस कार्यमा प्रत्यक्ष अप्रत्यक्षरुपमा सहभागी सम्पूर्णलाई सिद्धाश्रम शक्ति केन्द्र नेपाल धन्यवाद व्यक्त गर्दछ। खुदी आश्रमका तर्फबाट पनि आश्रमका सचिव साधक ऋषिराम सापकोटाले योगदान गर्ने सबैप्रति आभार प्रकट गर्नुभयो। उहाँले आश्रमलाई यस अवस्थासम्म ल्याई पुऱ्याउन जिन्सी, नगद, भाव-विचारले योगदान पुऱ्याउनु भएकालगायत हङकङ, अमेरिका, बेलायतमा रहेर नगद सहयोगका साथै शुभ-कामनारूपी सद्भाव पठाउनुहुनेहरू सबैलाई धन्यवाद दिनुभयो ।

शिव साधना कार्यक्रमको संचालन सावरपन्थी सदस्यज्यूले गर्नुभएको थियो। द्विदिवसीय कार्यक्रममा पचभैयास्थित श्री शिवगोरक्ष पीठमा परमाराध्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको श्रीचरणकमलमा रोट अर्पण गरिएको थियो ।

## शिवगोरक्षपीठ पचभैयामा रोट अर्पण सन्दर्भ–

# शिवगोरक्ष शक्तिको अनुभव–अनुभूति गर्दै अगाडि बढौँ

परमपूज्य सदगुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथले अलख निरञ्जन जगाएको शिवगोरक्ष पीठ (कास्की जिल्ला लेखनाथ ११ मचभैया गाउँको क्यूवेसी फाँटको केही माथि उचाइमा रहेको) गुरु गोरक्षनाथको मन्दिर नेपालकै आध्यात्मिक धरोहर हो । यस दिव्य भूमिमा गुरु गोरखनाथको कृपा, आशीर्वादको अनुभव–अनुभूति धेरै भक्तजन एवं साधकसाधिकाहरूले पाइसक्नु भएको छ । गोरखनाथ बाबा, माता काली, भगवान् भैरव र नागदेवताको कृपा त छँदै छ, त्यसको अतिरिक्त भर्खर खुदी आरती सञ्चालन केन्द्रले श्रावण महिनाको पुनीत अवसरमा आश्रम भवन उद्घाटनसहित 'शिव साधना'को माध्यमबाट यस क्षेत्रका साथै अन्य स्थानबाट पाल्नु भएका भक्तजन एवं साधकसाधिकाहरूलाई सद्गुरुदेव र भगवान् शिवसँग जोड्ने अद्वितीय कार्यक्रमलाई सफल पारी आध्यात्मिक समाज निर्माणको लागि नयाँ सिँढी निर्माण गरिदिएको छ ।

सिद्धाश्रम शक्ति केन्द्र कास्कीमा रहेका सम्पूर्ण सम्पर्क कार्यालय, आरती संचालन केन्द्रहरूबाट श्रावण महिनाको मंगलबार (श्रावण १५ गते) यसै गोरक्षपीठमा गरिएको रोट अर्पण कार्यक्रमले बाबा गोरखनाथ शक्तिपीठको ऊर्जा अनुभव गर्ने अझ बढी अवसर प्राप्त गराएको छ । गोरक्षपीठको रुपमा पूर्ण विकास गरी प्रत्यक्ष लाभ लिनको लागि गर्न सकिने कतिपय गुरु योजनाका कार्यहरू गर्न बाँकी नै छ ।

श्री शिवगोरक्षपीठ सिद्धाश्रम पचभैयाको संरक्षणको लागि गठन भएको कार्य समितिले यसलाई धार्मिक पर्यटन स्थलको रुपमा विकास गर्नको लागि संस्कृत, ज्योतिष, आयुर्वेद, योग, ध्यान, साधना आदि हाम्रा पूर्वीय दर्शनका सबै विधाहरूको केन्द्र बनाउने लक्ष्य राखी गुरु योजना तयार पारेको छ । यस कार्यक्रमको पूर्ण सफलताको लागि परमपूज्य सदगुरुदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वाद प्राप्त होस् भनी प्रार्थना गरौँ र यस पुनीत कार्यमा सबै साधकसाधिका एवं भक्तजनहरूको आत्माबाटै गुरुकार्यमा जुट्नको लागि श्रद्धा, भक्ति सधैँ जागिरहोस्, जागी रहोस्, जागी रहोस् ।

अन्त्यमा, खुदी आश्रम भवन निर्माण गर्ने क्रममा गुरुकृपा, आशीर्वाद शिरमा थापी उच्च मनोबलका साथ, साहसपूर्ण गुरुकार्य गर्ने जुझारु र कर्मठ खुदीका सम्पूर्ण साधकसाधिका, भक्तजन एवं सहयोगी मित्रहरूप्रति सिद्धाश्रम शक्ति केन्द्र गौरव गर्दछ र सदा सदाको लागि ऋणी रहने छ । गुरुकार्य गर्ने क्रममा भएका गल्ती, कमी–कमजोरीलाई परमपूज्य सद्गुरुदेव र यहाँहरू सबैसँग क्षमा माग्दछौँ ।

जय गुरुदेव !

## जीवन बन्छ मोती

*गोरखले निरञ्जन (अलख) जगाएको ठाउँ,*
*दिव्य चैतन्य छ खुदी पचभैया गाउँ,*
*गोरखको कृपा भयो अझै हामीमाथि,*
*दिन दिन गर्न पाइयो गुरुको आरती[२] ।*

*किरातेश्वर शिवजीको बसेर काखमा,*
*गोरख निखिल गुरुदेव राखेर आँखामा,*
*अब तिम्रो सेवा गर्न पाऊँ जुनी जुनी,*
*संसारलाई चिनाउने छौँ दिव्य गोरखभूमि[२] ।*

*रामघाट, लेखनाथ, खुदी, भगवती,*
*लामाचौर, माल्पाटन, घार्मी, विन्ध्यवासी,*
*आठै धाममा बलेको छ, गुरुको आरती,*
*भाग्यमानी भएको छ कास्की जिल्ला अति[२] ।*

*तिम्ले हात राखिदिए जीवन बन्छ मोती,*
*तिम्ले हात झिकीदिए निभ्छ आत्मा ज्योति,*
*तिम्रो कृपा विना गुरु कहाँ छ र आनन्द,*
*मनभित्र बस्नु भाछ सच्चिदानन्द[२] ।*

*सौभाग्यले गुरुदेवको शिष्य हुन पाइयो,*
*यो शिरले सधैँ गुरु चरण छुन पाइयो,*
*बाँकी जीवन सुम्पीदिएँ समाऊ गुरु हात्मा,*
*सँगै जाउँला गुरु धाममा गुरुदेवकै साथमा ।*

*संसारलाई चिनी सकेँ छैन कतै सुख,*
*गुरु विना जता जान्छ उतै दुखै दुःख,*
*फेरि फेरि जन्म लिने मनै छैन गुरु,*
*यही जन्ममा गुरुदेवकै नाम जपी मरुँ ।*

**(साधिका विष्णु सापकोटा)**
*सिद्धाश्रम शक्ति केन्द्र, पोखरा*

# खुदी आश्रमका लागि श्रावण

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ परंहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको अनुकम्पा, कृपा र आशीर्वादबाट निर्माण भएको सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको शिव साधनासहितको उद्घाटन कार्यक्रम खासगरी निश्चित तिथि श्रावण १४ गते सोमबार भनी धेरै दिन पहिलेदेखि नै तय भएको र उक्त दिनमा रुद्री पूजा रुद्राभिषेक नजुरेका कारण आश्रम भवनको वास्तु पूजा र रुद्री पूजा १३ गते आइतबारका दिन जुरेका कारण श्रावण १३ गतेका दिनदेखि हामीहरूको महान् पर्व शुरु भए जस्तो भएको थियो । त्यसैले २०७० श्रावण १३, १४ र १५ गतेको दिन विशेष महत्त्वपूर्ण दिन भयो । साधकसाधिका, भक्तजनहरू, जो सिद्धाश्रम शक्ति केन्द्र खुदीको आश्रम भवन निर्माणमा अहोरात्र खटेर काम गर्नुहुन्थ्यो, आश्रमका बारेमा चौबिसै घण्टा सोच्ने गर्नुहुन्थ्यो । आश्रम भवन र ग्राउण्ड तयार भएपछि साधकसाधिकाहरू र शुभचिन्तकहरूको धेरै खुशीको कुरा हुन गयो । आधिकारीक रूपमा वैदिक सनातन धर्मअनुसार विधि-विधान पुऱ्याएर आश्रममा गुरु आरती संचालन गर्न पाइयो । फेरि लेखनाथ-१२ खुदीको आश्रम निर्माण भएको वरिपरि यति वृहत् कार्यक्रम यसअघि भएको पनि थिएन । त्यसैले सम्पूर्ण साधकसाधिका, कार्यकर्ता, भक्तजनहरूमा विशेष उत्साह, जोश, जाँगर र उमंग थियो । श्रावण १३ गते रुद्री पूजा, वास्तु पूजा र लक्ष्य दीप प्रज्ज्वलनका साथै बेलुकी गुरु महिमाले भरपुर भएको भजनकीर्तन सम्पन्न भयो । श्रावण १४ गते करिब ८:३० बजेबाट गुरु पूजन गरेर कार्यक्रमको शुभारम्भ भयो । करिब ११:१५ तिर पूजन, हवन, मन्त्रजपका कार्यक्रम सकियो । त्यसपछि तुल व्यानरसहितको शोभायात्रा सम्पन्न भएको थियो ।

करिब ११:३० बजे शोभायात्रा शुरु भयो । पञ्चैबाजा, काठमाडौं उपत्यकाको ठिमीबाट गएको नृत्य समूह, बाजा, व्यानरसहितको आमा समूहहरूको टोली, स्कुलका विद्यार्थी, भजन टोली, विभिन्न प्ले कार्ड र व्यानरले सजिएका भक्तजन साधकसाधिकाहरूको समूह नेपालभरिकै गुरुदेवले निम्त्याउनु भएका साधकसाधिका, गुरुदेवका कर्मठ शिष्यहरू, जसलाई सिद्धाश्रम शक्ति केन्द्र नेपालका सा.प. रामजी अर्याल र सा.मा. विन्ध्येश्वरी बरालज्यूको नेतृत्वमा पूज्य गुरुदेवहरूको सूक्ष्म निर्देशनमा शोभायात्रा शुरु भएको थियो । आश्रम प्राङ्गणबाट शुरु भएको शोभायात्रा ले.न.पा.-१२ खुदी तागाको मुख, त्यसपछि रामबजारस्थित राम मन्दिर र भित्री बाटो हुँदै पोखरा विश्वविद्यालय जाने बाटोमा पर्ने १ नं. चोक, जुन ठाउँ लेखनाथ-१२ र १ को बीच ढुङ्गेपाटनमा पर्दछ, पुग्यो । शोभा यात्रामा वृद्धवृद्धा, युवक, केटाकेटीहरू श्रावण महिनाको चर्को घामको पनि पर्वाह नराखी, विश्राम नगरी आध्यात्मिक नाराहरू लगाई जयकार घन्काई पञ्चेबाजाको तालमा झुम्दै नाच्दै यति मनमोहकका साथ अगाडि बढ्दै थियो । अघि अघि पञ्चेबाजा, पछि पछि ठिमीको वाद्य समूह, पञ्चकन्या, विभिन्न आध्यात्मिक समूह, आमा समूहबाट उपस्थित हुनुभएका, हातमा सिंगारिएको कलश लिनुभएको दृश्य मानौं स्वर्गबाट अप्सरा, परी, गन्धर्व, किन्नरहरू सबै यसै कलश यात्रामा उपस्थित भए झैं भान हुन्थ्यो । हरेकका गेटमा सिंगारिएको फूलले सजिएका घडा राखिएको थियो । शोभायात्रामा हिँड्ने यात्रीहरूलाई सर्वत पानी, सादा पानी दिएर बाटामा पर्ने श्रद्धालुहरूले स्वागत गरेका थिए । शोभायात्रा पोखरा विश्वविद्यालयको गेट नजिकै भएर पुनः आश्रम प्राङ्गणमा आएर उद्घाटन सारोहमा परिणत भएको थियो । सिद्धाश्रम शक्ति केन्द्र नेपालका सा.प. रामजी अर्याल र सा.मा. विन्देश्वरी बरालज्यूको करकमलबाट नवनिर्मित आश्रम भवनको उद्घाटन भयो । उहाँहरूबाट विशेष प्लेटको अनावरण भयो । उता कार्यक्रममा अतिथिको आसन ग्रहणका साथसाथै बीच बीचमा भजनकीर्तनको कार्यक्रम संचालन भएका थिए । कार्यक्रमको उद्घोषणको कार्य लेखनाथ आश्रमका साधक जीवनाथ ढकालका साथै केन्द्रबाट जानु भएका साधक सुरेन्द्र थापाले पालैपालो गर्नुभएको थियो । दुवै उद्घोषकको प्रस्तुतिले कार्यक्रममा थ प सुगन्ध थपिएको थियो । कार्यक्रममा छोटो मीठो स्वागत मन्तव्य राख्नुहुँदै सिद्धाश्रम शक्ति केन्द्र खुदीका संयोजक लक्ष्मी पौडेलले सम्पूर्ण आगन्तुक अथिति, भद्र भलाद्मी, महिला, उपस्थित सबैलाई संस्थाको तर्फबाट स्वागत गर्नुभयो ।

कार्यक्रममा लेखनाथ न.पा. वडा नं.-१२ का भद्र भलाद्मी, जसले आश्रमलाई आर्थिक, भौतिक र नैतिक, आध्यात्मिक समर्थन गर्नुभएको थियो, उहाँहरू डिल्लीराम पौडेल, विष्णुप्रसाद पोखेल, दुर्गाप्रसाद सुवेदी, तारा अधिकारी, सिद्धाश्रम शक्ति केन्द्र लेखनाथका संयोजक साधिका राधा सापकोटा, सिद्धाश्रम शक्ति केन्द्र पोखरा रामघाटकी सह-संयोजक विष्णु सापकोटालगायतका आध्यात्मिक

# १३, १४ र १५ का दिनहरू

तथा समाजका अग्रज समाजसेवी व्यक्तित्वहरूले हर्षविभोर भई आफ्नो भनाइ राख्नुभएको थियो । त्यसपछि सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको स्मारिकाको रूपमा प्रकाशित श्रावण महिनाको गोरक्ष निखिल वाणीको लोकार्पण डिल्लीराम पौडेल, विष्णुप्रसाद पोखेल, दुर्गाप्रसाद सुवेदी, सोमनाथ वास्तोला, हरिप्रसाद च्वाई, तारा अधिकारी, योगी वलभद्रनाथज्यूले सामुहिक रूपमा गर्नुभयो । गुरुहरूको महिमा, शिव साधनाको महत्त्वको बारेमा र आश्रमसम्बन्धी परिचय दिनुहुँदै सापज्यू र समाज्यूले आफ्नो भनाइ राख्नुभयो । सापज्यूले शिव साधना सम्पन्न गराउनु भएको थियो । अन्त्यमा, लक्ष्यदीप प्रज्ज्वलन, प्रसाद वितरण एवं भजनकीर्तनको कार्यक्रम सम्पन्न भयो । मध्यपुर ठिमीका साधकसाधिकाहरूले शास्त्रीय नृत्य देखाउनुभएको थियो । कार्यक्रमको बीच बीचमा केन्द्रबाट जानुभएका साधक दशरथ थापा, लोक दोहोरी प्रतिष्ठानका केद्रीय पदाधिकारी श्रीराम अधिकारीज्यूले मीठो भजन गाउनुभएको थियो । त्यसैगरी, सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय रामघाटकी साधिका विष्णु पराजुलीले अत्यन्त मर्मस्पर्शी आध्यात्मिक कविता सुनाउनु भयो । आश्रम निर्माणसम्बन्धी आय-व्यय विवरण निकै पारदर्शीरुपमा सबैको मन छुने गरी साधक ऋषिराम सापकोटाले पेश गर्नुभएको थियो । यसरी आश्रम भवन उद्घाटन तथा शिव साधना कार्यक्रम समापन भएको थियो ।

हरेक वर्ष श्रावण महिनाको हरेक मंगलबारका दिन झैं श्री शिवगोरक्षनाथ शक्तिपीठ सिद्धाश्रममा पालोको क्रममा आरती संचालन केन्द्र खुदीको रोट अर्पण गर्ने पालो थियो । २०७० श्रावण १५ गते मंगलबारका दिन बिहानै ९ बजेतिरै पोखरा रामघाटका साधकसाधिका, लेखनाथका साधकसाधिका, काठमाडौं, गोरखा, अन्य जिल्लाका पनि साधकसाधिकाहरूसहित लेखनाथ-११ स्थित पचभैया भन्ने ठाउँमा रहेको श्री शिवगोरक्षनाथ मन्दिरमा भजनकीर्तनका साथ रोट अर्पण गर्ने कार्यक्रम, जुन कार्यक्रम पूर्व सम्पन्न कार्यक्रमहरू भन्दा धेरै रमाइलो, उत्साह र उमंगले भरपूर थियो, श्री शिवगोरक्षनाथ शक्तिपीठका संरक्षक योगी बलभद्रनाथज्यूबाट परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको श्रीचरणकमलमा रोट अर्पण भयो । उक्त दिन पनि सबै स्वर्गबाट आएका अप्सरा, गन्धर्व, किन्नरको टोली नै आएर नाचगान गरेको, भजन गाएको जस्तो भान हुन्थ्यो जुन आनन्द र रमाइलोलाई शब्दमा व्याख्या गर्न असम्भवजस्तो भएको थियो । यसरी सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीले आयोजना गरेको त्रि-दिवसिय कार्यक्रम समापन भयो । परमपूज्य सद्गुरुदेवहरूको कृपा, आशीर्वाद एवं सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालयहरू भक्तपुर, ललितपुर, बानेश्वर, तीनकुने, लमजुङ्ग, चितवन, तनहुँ, त्यस्तै, मध्यपुर ठिमी आश्रम, पर्सा आश्रम र कास्कीका विशेष गरी सम्पर्क कार्यालयहरू रामघाट, लेखनाथ, घार्मी आश्रम, लामाचौर आश्रमका सम्पूर्ण साधकसाधिकाहरूको माया, सद्भाव, सहयोगबाट कार्यक्रम सफल भएको मान्न सकिन्छ । विशेष गरेर खुदी आश्रमका साधकसाधिकाहरूको गुरुप्रतिको समर्पण, भक्ति, खटाई र सहयोगी भावनालाई समाजका विशिष्ट व्यक्तित्वहरूबाट समेत हृदयबाटै प्रशंसा भएको छ । यहाँका बासिन्दाहरूले पनि सबैप्रति आभार व्यक्त गरेका छन् ।

बाहिरबाट आउनुभएका साधकसाधिका, भक्तजनहरूलाई राम्रोसँग सेवा गर्न नसकेको गुनासो पनि खुदी आश्रमबासीहरूको रहे पनि खुदी आश्रमका साधकासाधिकाहरूले जे गर्नुभयो प्रशंसायोग्य कार्य गर्नुभएको छ जसको फलस्वरुप सिद्धाश्रम शक्ति केन्द्र नेपालको अझै प्रगति, उन्नति हुँदै जाने देखिन्छ ।

उक्त तीन दिन वर्षाद्को समय भएर पनि मौसमले भने धेरै साथ दिएको थियो । गुरुहरूप्रतिको आस्था र विश्वास हामी सबैमा त प्रगाढ छँदैछ, जो गुरुदेवहरूको कार्यक्रममा सहभागी भएका छैनन्, थिएनन्, उहाँहरूले पनि गुरुकृपा यस्तो हुँदोरहेछ भन्ने महसुस गर्नुभएको छ ।

हुन त यो सम्पूर्ण कार्यको बागडोर सूक्ष्म सत्ताबाट गुरुदेवहरूले नै सम्हाल्नु भएको हो । तैपनि आध्यात्मिक रुपमा वर्षाद्को समय, खेती बालीको समय, जताततै दैवी प्रकोप र विपत्तिहरू परेको बेला टाढा टाढाबाट आई आफ्नो महत्त्वपूर्ण समयलाई अर्पण गरी यस कार्यक्रमलाई भव्य, सभ्य र आकर्षकरूपमा सम्पन्न गरिदिनु हुने सम्पूर्ण शुभचिन्तक, शुभेच्छुक व्यक्तित्वहरूलाई सिद्धाश्रम शक्ति केन्द्र नेपाल, आरती संचालन केन्द्र खुदी र अन्य समस्त आश्रमको तर्फबाट हार्दिक आभारका साथै 'जय गुरुदेव !' को न्यानो अभिवादन अर्पण गर्दछौं ।

जय गुरुदेव !

**सिद्धाश्रम शक्ति केन्द्र खुदी आश्रम भवनको सहयोगार्थ रकम सहयोग प्रदान गर्नुहुने दाताहरूको नामावली गतांकमा प्रकाशित गरिएकोमा कतिपयको छुट्न गएको र सहयोग गर्ने हातहरू थपिएको हुनाले नयाँ दाताहरूको नामावलीसहित छुट भएका नाम यस अंकमा प्रकाशित गरेका छौं । गतांकमा नाम छुट्न गएकोमा क्षमायाचना गर्दै सबै सहयोगीहरूलाई 'जय गुरुदेव !' को न्यानो अभिवादन टक्र्याउँदछौं ।**

१) हिरा तिमिल्सिना, लेखनाथ-१२, खुदी रु.१,१११/-
२) सीता+रामप्रसाद तिमिल्सिना रु.१,११५/-
३) मार्कण्ड अधिकारी, तारा अधिकारी रु.२,००५/-
४) जानुका अधिकारी, पोखरा-१०, रामघाट रु. १,००५/-
५) हरिप्रसाद च्वाई, लेखनाथ-१२, खुदी रु. १,००२/-
६) मुरली मोहन तिवारी, लेखनाथ-१२, खुदी रु. १,००५/-
७) जितप्रसाद द्वा, कास्की, लेखनाथ-८, शिशुवा रु.१,००१/-
८) केदारप्रसाद अधिकारी, कास्की, लेखनाथ-१२ रु. १,००८/-
९) सागर गुरुङ्ग, लेखनाथ-१२, ढुंगेपाटन रु. १,०५०/-
१०) दिलकुमार के.सी., काठमाडौं रु. १,००५/-
११) मछिन्द्र अधिकारी, लेखनाथ-१२, खुदी रु. १,००५/-
१२) रामबहादुर गुरुङ्ग, सावित्री गुरुङ्ग, पोखरा-१० रु. १,०११/-
१३) ठुमा कार्की, बसुन्धरा, काठमाडौं रु. १,११५/-
१४) श्री गोपाल प्रजापति, मध्यपुर, ठिमी रु. १,१११/-
१५) जयलाल भट्टराई, पोखरा-२, विन्ध्यवासिनी रु. १,०१०/-
१६) मिलनसिल महिला समूह, लेखनाथ-१२ रु. २,१००/-
१७) कल्पना सापकोटा, लेखनाथ-१२, खुद रु. १,००५/-
१८) प्रगतीसिल महिला समूह रु. १,१०५/-
१९) रामचन्द्र गिरी, लेखनाथ-८ रु. १,०००/-
२०) मैना कार्की, लेखनाथ-११ रु. १,९००/-
२१) भिम बहादुर सापकोटा, लेखनाथ-१२ रु. १,१११/-
२२) भक्तराम श्रेष्ठ रु. १,०११/-
२३) कृष्णप्रसाद पौडेल, लेखनाथ-१, खुदी रु. १,५१५/-
२४) रामप्रसाद पौडेल, ले.न.पा.-१२ रु. १,१११/-
२५) एकमाया ओझा, ले.न.पा.-१२ रु. १,१११/-
२६) फुलमाया मिजार, पोखरा-१०, अमरसिंह रु. १,१११/-
२७) तुलसी गुरुङ्ग, पोखरा-४, वगालेटोल
हाल हङकङ रु.१५,५००/-
२८) विन्दु विमली, ले.न.पा.-१२ रु. १,५०५/-
२९) कुन्ता पौडेल, लेखनाथ-१२, खुदी रु. १,१००/-
३०) विजयलक्ष्मी पौडेल, लेखनाथ-१२, खुदी रु. १,००५/-
३१) कृष्णप्रसाद कोइराला, लेन.पा.-१२, खुदी रु. १,०१०/-
३२) दुर्गादत्त भूर्तेल रु. १,१११/-
३३) नारायणप्रसाद न्यौपाने, ले.न.पा.-१२ रु. १,१०५/-
३४) संझना स्व. जमुना कुमारी रु. २,०५०/-
३५) राजेन्द्रबहादुर पराजुली, पोखरा-१५ रु. १,१००/-
३६) कमला बराल, लेखनाथ-१२, खुदी रु. १,००५/-
३७) जानकी लामिछाने, लेखनाथ-११ रु. २,५००/-
३८) खडानन्द लामिछाने, पोखरा-९ रु. १,१११/-
३९) शोभा तिमिल्सिना, पोखरा, न्यूरोड रु. ३,५००/-
४०) हरिप्रसाद रिजाल, धनमाया रिजाल, लेखनाथ-१२, खुदी रु. १,१११/-
४१) माधव गौतम, विष्णु गौतम, ले.न.पा.-१२, रु. १,१११/-
४२) लेखनाथ घिमिरे, लेखनाथ-१२, खुदी रु. १,००५/-
४३) **कृष्णराज ढकाल, शुशिला ढकाल, लेखनाथ-१२, खुदी अघिल्लो पत्रिकामा भूल भएको रु. १०,०५१/- हुनुपर्नेमा १,०५१/- मात्रै भएकोमा पनि भूल सुधार ।**
४४) डिल्लीप्रसाद वराल, पोखरा-७ रु. १,७५०/-
४५) चूडामणि अधिकारी/लिला अधिकारी, ले.न.पा.-१२, खुदी रु. ६,५३२/-
४६) शिवप्रसाद तङ्या, लक्ष्मी तङ्या, पृथ्वीचोक रु. २,००१/-
४७) जनकराज सुवेदी, मनिता सुवेदी, बेल्जीयम रु. ५,००५/-
४८) सन्तोष सापकोटा, अमीता सापकोटा, अमेरिका रु.१०,०००/-
४९) बाबुराम तिमिल्सिना/गोमा तिमिल्सिना, लेखनाथ-१२, खुदी रु. १,१११/-
५०) सोभित ढुंगाना लेखनाथ खुदी १२ रु. ११११।-

**सिद्धाश्रम शक्ति केन्द्र खुदी आश्रम भवन निर्माणार्थ जिन्सी सहयोग पनि प्राप्त भएको थियो जसको प्रकाशन गतांकमा छुट्न गएकोले क्षमायाचना गर्दैं उहाँहरूको नाम पनि यहाँ प्रकाशित गरिएको छ ।**

१) श्रीराम काष्ठ उद्योगबाट रु. ९,०००/- बराबरको झ्यालको खापा+थप नगद रु. ३,०००/-
२) के.सी. हार्डवेयर लेखनाथ-१२, पावरहाउसबाट ५ बोरा सिमेन्ट ।
३) कल्पना ढकाल रु. २,०००/- ढोकाखापा सौजन्य ।
४) अर्जुन पगेनी ले.न.पा.-१४, लेखनाथ-१४ बाट ५ बोरा सिमेन्ट ।
५) दैनिक सप्लायर्स तालचोकबाट ५ बोरा सिमेन्ट
६) रमेश+सिल सापकोटा, लेखनाथ-१२, खुदीबाट ५०२५ (दुई वटा सिलिङ फ्यान)
७) विमला ओझा, लेखनाथ-१२, खुदीबाट ५ बोरा सिमेन्ट ।
८) सुनिल श्रेष्ठ, पोखरा OKM. 20 littre primer
९) उत्तम कुमार श्रेष्ठ, लेखनाथ-१२, खुदीबाट 20 littre cement primer र व्रसहरू
१०) विष्णु सापकोटा+वृहस्पती सापकोटाबाट आरती हलको मञ्च सजावटको सम्पूर्ण खर्च व्यहोर्नु भएको छ ।
११) खिमबहादुर सेरचन पोखरा-८ सिमलचौरबाट २० लि. डिस्टेम्वर

# खुदी आश्रम कार्य समितिका पदाधिकारीहरू

***सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीले गत श्रावण १४ र १५ गते आश्रम भवन उद्घाटन तथा शिव साधना कार्यक्रम भव्यताका साथ सम्पन्न गरेको थियो । खुदी आश्रमले गुरुकार्य सम्पादनका लागि सरल तथा सजिलो होस् भन्ने उद्देश्यले एउटा कार्यसमिति गठन गरेको छ जसका पदाधिकारी साधक-साधिकाहरूको नामावली निम्न प्रकारको रहेको छ :***

संयोजक : लक्ष्मी पौडेल
सह-संयोजक : राजकुमारी गुरुङ्ग
सचिव : ऋषिराम सापकोटा
कोषाध्यक्ष : नमा खाँण

**सदस्यहरू**

विष्णु न्यौपाने, लिला खड्का, प्रमिला ढकाल, रिता थापा, कल्पना ढकाल, शुशिला ढकाल, गंगा पौडेल, कृष्णप्रसाद पौडेल, सरस्वती अधिकारी, सुमित्रा खाँण, प्रतिभा सापकोटा ।

**अन्य सदस्यहरू**

राधा पौडेल, लक्ष्मी ढकाल ख, सुमित्रा कंडेल, मुक्ती तिवारी, मिना ढकाल, कृति वराल, सरस्वती खनाल, लीला अधिकारी, सरिता खत्री, विष्णु अधिकारी, चन्द्र कुमारी पौडेल, सावित्री अधिकारी, तिला सापकोटा, कल्पना गोदार, राधा लामिछाने, देवका क्षेत्री, ओसी मगर, जगन्नाथ पौडेल, टेकनाट खनाल, केदार अधिकारी, बाबुराम खनाल, महादेव गौतम, कृष्णप्रसाद खनाल, शिव भूजेल, नानुका कुँवर, विष्णु सापकोटा, होमनाथ पौडेल, मार्कण्ड अधिकारी, श्रीमाया पौडेल, कालिका पौडेल, उमनाल सुवेदी, सीता सापकोटा, सीता सुवेदी, हरिप्रसाद च्वाई, सारदा बास्तोला, चवली देवी पौडेल (विष्णु दिदी), पार्वती अधिकारी, नारायण हरि तिवारी ।

**सरसफाई यूनिट**

संयोजक : रिता थापा
सह-संयोजक : जगन्नाथ पौडेल
विष्णु सापकोटा
ओसी मगर
तिला सापकोटा
पार्वती अधिकारी
श्रीमाया पौडेल

**जनसम्पर्क यूनिट**

संयोजक : राजकुमारी गुरुङ्ग
सह-संयोजक : लिला खड्का
चन्द्र कुमारी पौडेल
प्रमिला ढकाल
महादेव गौतम

**प्रसाद व्यवस्थापन**

संयोजक : कल्पना ढकाल
सह-संयोजक: सरिता खत्री
देवका अधिकारी
सरस्वती खनाल
सावित्री अधिकारी
बाबुराम खनाल
राधा लामिछाने

**संगीत तथा भजन कीर्तन यूनिट**

संयोजक : कृष्णप्रसाद पौडेल
सह-संयोजक: मार्कण्ड अधिकारी
सदस्य : हरिप्रसाद च्वाई
,, : कल्पना गोदार
,, : टेकनाथ खनाल
,, : मुक्ति तिवारी
,, : होमनाथ पौडेल
,, : नानुका कुँवर
,, : गंगा पौडेल
,, : सरिता खत्री
,, : उमनाथ सुवेदी
,, : नारायण हरि तिवारी
,, : कृष्णप्रसाद खनाल

**सल्लाहकार समिति**

| | |
|---|---|
| विष्णु सापकोटा, रामघाट | राधा सापकोटा, लेखनाथ आश्रम |
| विदुर सापकोटा | डिल्लीराम पौडेल |
| विष्णु पोखेल | दुर्गाप्रसाद सुवेदी |
| तारा अधिकारी | रमा नेपाली |
| रामराज अधिकारी | सोमनाथ बास्तोला |
| गजेन्द्रप्रसाद च्वाई | रामचन्द्र पौडेल |
| नारायणी तिवारी | कृष्णप्रसाद खनाल |

अनुभव/अनुभूति

# आश्रम भवन निर्माणमा होमिने सौभाग्य मिल्यो

> जेहोस् खासै आधिकारिक आय स्रोत, आर्थिक स्रोत नभएता पनि यति राम्रो आरती भवन बनाउन सक्षम भई गत श्रावण १४ गते शिव साधनासहित भव्य कार्यक्रम गरेर यस आरती संचालन केन्द्र खुदीको भवन उद्घाटन गर्न सफल हुनुभएकोमा सम्पूर्णकार्यकर्ता साधक-साधिकालाई हार्दिक आभार प्रकट गर्दै धन्यवाद टक्र्याउँदछु ।

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पा एवं आशीर्वादबाट सिद्धाश्रम शक्ति केन्द्र नेपालका विशेष गरी आरती संचालन केन्द्र खुदीका साधकसाधिका भक्तजनहरूको अथक प्रयासबाट निर्माण भएको सिद्धाश्रम शक्ति केन्द्र खुदी आश्रमको (हाल आरती संचालन केन्द्रमा परिणत) आफ्नै आरती भवन बनाउने क्रममा मैले पनि गुरुकार्य गर्ने शौभाग्य प्राप्त गरेँ । निर्माणको शुरुआतकै गुरुकार्य अर्थात् आश्रम भवनको डिजाइन गर्ने सौभाग्य गुरुदेवले मलाई जुराई दिनुभयो । डिजाइन गरेँ र निर्माण गर्ने क्रममा बेला बेलामा सरसल्लाह र सुझाव पनि दिन पाइराखेँ । घरदैलो कार्यक्रममा अर्थ संकलन गर्ने क्रममा पनि म कहिलेकाहिँ जुट्ने मौका गुरुदेवले मिलाई दिनुभयो । सायद, गुरुदेवसँग मेरो नाता जन्मौं जन्म पहिलेकै भएर होला, मैले आश्रमसँग जोडिएर यो थोरै भने पनि गुरुकार्य गर्ने मौका पाएँ ।

अहिले हाम्रो समाजमा विभिन्न धर्म र सम्प्रदायहरू जन्मेका छन् । कहिलेकाहिँ म हिँड्ने जाने गरेको पनि थिएँ । तर मेरो मन त्यति आकर्षित भएन । मलाई तानेन । तर जब सिद्धाश्रम शक्ति केन्द्रको कन्ट्याक्ट प्वाइन्ट लेखनाथ-१२ मा खोलियो, म जागिरबाट फुर्सद पाएका बखत आरतीमा जाने समय मिलाएर जान्थेँ । सोमबार र विहीबार आरती संचालन हुन्थ्यो । मलाई गुरु आरती अति मन पर्न लाग्यो । गुरुको महिमा, कीर्तन, भजन गाउन पाउँदा अति आनन्द लाग्न थाल्यो । मैले अनुभव गर्न थालेँ कि गुरुदेवसँगको मेरो नाता धेरै पहिलेदेखि नै रहेछ । त्यसैले त अरू धार्मिक कार्यक्रम र सम्प्रदायले मलाई आकर्षित गरेन र गुरुदेवको कार्यक्रम आउने वित्तिकै मैले थोरै भए पनि अथवा मेरो आफ्नो बलबुता र सामर्थ्यले भ्याएसम्म आश्रमको कार्यक्रममा सरीक भई गुरुकार्य गर्न मन लाग्थ्यो र गुरुकार्य गरेँ भन्ने मैले ठानेको छु । हुन त मैले के पो गर्न सक्थेँ र ? म एउटा निमित्त मात्रै हो, गर्ने गराउने उनै ब्रह्माण्डनायक सद्गुरुदेवहरू नै हुनुहुन्छ । तैपनि मलाई निमित्त कै भूमिका भए पनि सानोतिनो जे-जस्तो कार्य आउँछ, काम गर्ने र भूमिका निर्वाह गर्ने शौभाग्य प्रदान गर्नुहुने गुरुदेवहरूलाई हृदयबाटै कोटिकोटि नमनका साथै धन्यवाद टक्र्याउँदछु ।

शून्य बजेटबाट पनि यति राम्रो सुन्दर गोरक्ष निखिल आरती संचालन भवन निर्माण गर्न सफल हुनु भएको र सिद्धाश्रम शक्ति केन्द्र नेपालका विभिन्न तह र तप्कामा रहेर खट्नुहुने गुरुदाइ, गुरु दिदीहरू, साधकसाधिकाका साथै खुदी आश्रममा खट्नु हुने सम्पूर्ण साधकसाधिका, भक्तजनहरूमा भएको अदम्य साहस र आध्यात्मिक ऊर्जाबाट म धेरै नै प्रभावित भएँ र धेरै धेरै धन्यवाद टक्र्याउँदछु किनभने हाम्रो लेखनाथ-१२ खुदीमा आश्रम नआएको भए मैले सायद गुरुदेवसँग ढिलै भए पनि जोडिने मौका पाउने थिइँन कि ? हुन त गुरुदेवले आफूसँग जोड्नलाई अनेक मार्गहरू प्रशस्त गरिदिनु हुन्छ । जेहोस्, खासै आधिकारिक आयस्रोत, आर्थिक स्रोत नभएता पनि यति राम्रो आरती भवन बनाउन सक्षम भई गत श्रावण १४ गते शिव साधनासहित भव्य कार्यक्रम सम्पन्न गरेर यस आरती संचालन केन्द्र खुदीको भवन उद्घाटन गर्न सफल हुनुभएकोमा सम्पूर्ण कार्यकर्ता साधकसाधिकाहरूलाई हार्दिक आभार प्रकट गर्दै धन्यवाद टक्र्याउँदछु । जसरी आश्रम बनाउन सफल भयौँ/हुनुभयो यसरी नै यस संस्थाको आध्यात्मिक प्रगतितर्फ सिस्टमेटिक तरिकाले यसको प्रवर्द्धन, संरक्षण गर्न अनुशासित भएर लागि परौँ, समाजका सबै प्रबुद्ध व्यक्तिहरूले यसलाई समाजको धरोहर सम्झन सकून्, सिद्धाश्रम शक्ति केन्द्रबाट सबै उमेरका व्यक्तिहरूले आफूलाई गुरुदेवसँग जोड्ने मौका पाउन, आफ्नो जीवनलाई आध्यात्मिक अनुशासित र मर्यादित जीवन बनाउन सकून्, गुरुदेवको सदा-सर्वदा कृपा, अनुकम्पा र आशीर्वाद सबैलाई प्राप्त होस् भन्दै सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको उत्तरोत्तर प्रगति होस्, गुरुदेवको न्यानो माया सम्पूर्ण खुदीबासीलाई बाँड्न सफल होस् भन्दै शब्दभन्दा धेरै माथि हुनुभएका गुरुदेवलाई हाम्रो २/४ अक्षरको भावभित्र समेट्न त सकिँदैन तैपनि मेरो अन्तरआत्माको गुरुहरूप्रतिको भावभक्ति र अनुभूति सबै समक्ष राख्ने शौभाग्य प्रदान गर्ने सिद्धाश्रम शक्ति केन्द्र नेपाललाई हार्दिक आभार प्रकट गर्दै कलम बन्द गर्ने आज्ञा माग्दछु ।

जय गुरुदेव !

साधक सल्लाहकार
**विदुर सापकोटा**
लेखनाथ-१२, खुदी

# गुरु विना जीवन नै छैन

**गुरुर्ब्रह्मा गुरुर्विष्णु गुरुर्देवो महेश्वरः ।**
**गुरु साक्षात् पर ब्रह्म तस्मै श्री गुरवे नमः ॥**

वास्तवमा 'एको ब्रह्म द्वितीयो नास्ती' एक ब्रह्म मात्र छ अरू केही पनि र कोही पनि छैन । तर जब सत्व, रज र तम यी तीन गुणहरूको साम्यता भंग हुन्छ तब त्रिगुणात्मिका माया खडा हुन्छिन् र त्यस माया संयुक्त ब्रह्मलाई ईश्वर वा भगवान् भन्दछन्, त्यै ईश्वर रजोगुणसँग मिल्दा सृष्टिकर्ता ब्रह्म, सत्वगुणसँग मिल्दा पालनकर्ता विष्णु र तमोगुणसँग मिल्दा संहारकर्ता रुद्र (शिव) भनिन्छन् । यो जगत ईश्वर कै स्वरूप हो ।

श्री श्री महायोगी गुरु गोरखानाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज अद्वितीय गुरुहरू हुनुहुन्छ । गुरु गोरखनाथलाई शिवजीको रूपमा पूज्दछन् भने परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई निखिलेश्वर महादेवको रुपमा पूजा अर्चना गर्ने गरिन्छ । उहाँहरू दुवै गुरुहरूको महिमा अपरम्पार छ । उहाँहरू नै परमात्मा हुनुहुन्छ, परब्रह्म हुनुहुन्छ । परमात्मा सच्चिदानन्दस्वरूप एवं ज्ञान, दयाका खानी हुनुहुन्छ । भगवान् सर्वन्तर्यामी र सर्वज्ञ हुनुहुन्छ । परमात्मा भक्तवत्सल, भक्तचिन्तामणि हुनुहन्छ । हामीलाई भुक्ति मुक्ति प्रदान गर्नुहुन्छ । शोक र मोहबाट बचाएर कल्याण गर्नुहुन्छ । हामीहरूलाई जो प्राप्त छ सद्गुरुदेवकै अनुग्रहले हो । तर जो अभक्त भए तापनि प्रभुको सत्ता स्वीकार्दछन् र द्वेषले, रीसले, लोभले जुन कुनै प्रकारले स्मरण गरे पनि त्यसको उद्धार गर्नुहुन्छ । गुरुदेवलाई भक्ति प्यारो छ । भक्ति श्रद्धापूर्वक, निष्ठापूवक अथवा राग, द्वेष, काम, क्रोध, लोभ, मोह आदिबाट अभिभूत भएर नै सम्झे पनि तिनको उद्धार गर्नुहुन्छ । यस्ता प्रभुलाई हृदयदेखि नै प्रणाम गर्दछौं ।

---

**यस्ता जन्म बिते हुन् अघि कति लाखौं करोडौं जति ।**
**हे सर्वज्ञ तथापि शान्ति सुखको लागेन पत्तो रति ॥**
**जे कुद्नु अवता जतातिर कुदौं लाग्छन् कतै ठक्कर ।**
**जे गर्नु गरिबक्सियोस् अवता पर्छौं प्रभुकै भर ॥**
**हे शम्भो शिव हे सतिपति सँधै शिर्माथि गंगा लिन्या ।**
**यो योगी हरिभक्त भक्तहरूका संताप सब नाशन्या ॥**
**हे शिर्मा शशिलाउन्या मृग लिन्या तीन नेत्रले शोभिन्या ।**
**हे निर्वाण अनन्त सेवक म हुँ ज्ञान बक्सियोस् स्थिर हुन्या ।**

---

विना गुरु जीवनको अर्थ हुँदैन भन्ने ज्ञात भएपछि म सचेत भएँ । ले.न.पा.-१२ मा सिद्धाश्रम शक्ति केन्द्रको स्थापन भयो । त्यस दिनदेखि सदा हप्ताको दुई दिन सोमबार र विहीबार श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरु धारण गरी सबै साधकसाधिका साथीहरूको साथमा आरती, भजनकीर्तन गर्दै र हरेक दिन 'जय गुरुदेव !' मा नै समर्पित भइरहेको छु । म किसानको छोरा गुरुमै जीवन समर्पण गर्दैछु ।

मानवजीवन भनेको ८४ लाख योनी बदलेर पाएको जीवन हो । यस्तो जीवन पाउनु भनेको कठोर तपस्याबाट मात्र उपलव्ध हुन्छ । यही कुरालाई ध्यानमा राखेर मैले मानवजीवन सुधार गरेर लैजानु पर्छ भनी विचार गरेको छु । जसरी फोहर कपडा साबुन पानीले सफा गरिन्छ मेरो मनको दाग केले सफा गर्छ, म कसरी मोक्ष हुन्छु त भन्ने विचारले ममा ठूलो छटपटी ल्यायो । विना गुरु मेरो जीवनको सार्थकता छैन भन्ने सत्यलाई आत्मसात गरेर 'जय गुरुदेव !' को शरणमा पुगें ।

गुरुदेवलाई राख्ने, आराधना गर्ने भवन नै थिएन । त्यसैले सिद्धाश्रम शक्ति केन्द्रका साधकसाधिकाहरू मिलेर जग्गाको खोजीमा हिँड्यौं । जग्गा पनि प्राप्त भयो तर बनाउने रकम कहाँबाट जम्मा होला त भनी त्यसैमा सोच विचार भयो । सबै साथीहरू समेत भई हरेक घरमा पुगेर भक्तजनहरूसित हात थाप्ने निधो गरियो । यसरी आश्रम भवनको निर्माण भयो । यही नै हो हर्षको कुरा । जो-जो साथीहरूले जे-जे काम गर्नुभयो, मलाई पनि खटाउने काम भयो, यसका लागि परमपूज्य सद्गुरुदेवहरूको श्रीचरणकमलमा कोटिकोटि साष्टाङ्ग दण्डवत् प्रणाम अर्पण गर्दछु ।

म सानै उमेरदेखि भगवान्कै भजनकीर्तनमै रमाएँ । अब त जीवनको आधा उमेर फड्का मारिसक्यो, अबको जीवन सदैव गुरुदेवमा नै समर्पण गरेको छु । सिद्धाश्रम केन्द्र ले.न.पा.-१२ किरातेश्वर मन्दिरको संस्थापक सदस्यको नाताले सबैलाई आह्वान गर्न चाहन्छु कि आउनुहोस्, गुरुदेवमा समर्पित हुनुहोस्, जीवन सुधार्नुहोस् ।

जय गुरुदेव ! जय गुरुदेव !! जय गुरुदेव !!!

**कृष्ण प्रसाद पौडेल**
*(ले.न.पा.-१२, खुदी)*

**परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को
कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा
आश्रम भवन निर्माणमा सहयोग गर्ने

समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू
सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा
सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**मार्कण्ड अधिकारी, तारा अधिकारी**
**सम्पूर्ण अधिकारी परिवार**
ले.न.पा.-१२, कास्की

---

**परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को
कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा
आश्रम भवन निर्माणमा सहयोग गर्ने
समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू
सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा
सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**भोजराज सापकोटा, सोमनाथ सापकोटा**
**तथा सम्पुर्ण परिवार**
थुमाको डाडाँ-९, तारकाङ्ग

---

**परमपूज्य सद्‌गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को
कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा
आश्रम भवन निर्माणमा सहयोग गर्ने
समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू
सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा
सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।
**बाबुराम खनाल, राधिका खनाल**
**तथा सम्पुर्ण परिवार**
ले.न.पा.-१२ खुदी

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**

**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को

कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा

आश्रम भवन निर्माणमा सहयोग गर्ने

समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू

सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा

सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**असित सुवेदी, लक्ष्मी सुवेदी तथा सम्पूर्ण परिवार,**

ले.न.पा. -१२ ढुङ्गेपाटन

---

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**

**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को

कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा

आश्रम भवन निर्माणमा सहयोग गर्ने

समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू

सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा

सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**राधा सापकोटा, प्रेम प्रसाद सापकोटा**

**तथा सम्पुर्ण परिवार**

ले.न.पा.-७ डाडाँकोनाक कास्की

---

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**

**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को

कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा

आश्रम भवन निर्माणमा सहयोग गर्ने

समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू

सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा

सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**रमेश सापकोटा, सिता सापकोटा**

**तथा सम्पूर्ण परिवार**

ले.न.पा.-१२, खुदी

## श्रीकृष्ण जन्माष्टमी सन्दर्भ

# आत्मनिष्ठामा रहनु नै श्रीकृष्णको वन्दना

जन्माष्टमी आत्मिक सुख जगाउनका लागि, आध्यात्मिक बल जगाउनका लागि, जीवलाई परमात्मामा सरोबर गर्ने तिहार हो, सुषुप्त प्रेम जगाउने दिव्य रात्रि हो ।

हे भगवान् कृष्ण ! केही मानिसहरूको मान्यता रहेको छ कि सच्चा मानिसको कृति, शौर्य र हिम्मत बढाउन र मार्गदर्शन गर्नका लागि हजुर अवतरित हुनुभएको थियो । कोही भने मलयाचलमा चन्दनको रूखले आफ्नो सुगन्ध फैलाएजस्तै आफ्ना सोह्र कला सम्पन्न अवतारबाट हजुरले यदुवंशको शोभा र आभा बढाउन अवतरित हुनुभएको मान्छन् । कसैले यसो भन्छन् कि वसुदेव र देवकीको तपस्याबाट प्रसन्न भएर देवद्रोही दानवहरूको अत्याचार निमित्यान्न पार्न, भक्तहरूको भावनालाई तृप्त पार्न वसुदेवको घरमा निर्गुण-निराकार भगवान् सगुण-साकार भएर अवतरित हुनुभएको थियो । यस्तै अन्य अन्य रूपमा कृष्णको अवतरणलाई लिन्छन् मानिसहरू ।

जीवको चौरासी लाख जन्मको जे संस्कार छ, त्यसै संस्कारलाई लिएर ऊ मनुष्य शरीरमा आउँछ । अतः ऊ स्वाभाविकरूपमा विषय-विकार एवं इन्द्रियहरूको भोगमा भट्किन्छ । खानु-पिउनु, सुत्नु, भयभीत हुनु, बच्चा जन्माउनु, दुःख आउँदा आत्तिनु, सुख आउँदा हर्षित हुनु र अन्तमा मर्नु यी पुराना काम गर्दा गर्दै जीव मनुष्यशरीरमा आउँछ । मनुष्यशरीरमा पनि यिनै काम गर्दा गर्दै ऊ खतम नहोस् भनेर भगवान्‌को अवतार हुन्छ ।

**अवतरति इति अवतारः ।**

अर्थात्, जो माथिबाट तल झर्छ त्यसलाई अवतार भनिन्छ ।

**हेतु रहित जग जुग उपकारी**
**तुम्ह तुम्हार सेवक असुरारी ॥**(रामचरित., उ.कां. : ४६.३)

भक्त, सज्जन, साधु पुरुषहरूको उद्धारका गर्नका लागि तथा दुष्कृत गर्नेहरूको विनाशका लागि अवतार हुन्छ । गीता (४.८) मा भनिएको छ–

**परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।**

जो साधु स्वभावका छन्, जसको लागि संसार असार छ, जो सच्चाइसित, प्रसन्नताले, पवित्रताले, परहितको भावनाले जिउँछ यस्ता साधुजनको पोषणका लागि र जसले शोषण गर्दछ, जो अति स्वार्थी छ, अति कामी, अति क्रोधी छ, अति मोही, लोभी, लालची छ, यस्ताहरूको विनाश गरेर उनीहरूको कल्याण गर्नका लागि जुन अवतरण हुन्छ त्यसलाई अवतार भनिन्छ ।

दुर्जनहरूको विनाशमा पनि उनीहरूको हित लुकेको हुन्छ, परम कल्याण छ किनकि उनीहरूलाई भगवद्धामको प्राप्ति हुन जान्छ र विनाश हुँदा उनीहरू पापकर्म गर्ने कार्यबाट र शोषण गर्ने दुष्कार्यहरूबाट मुक्त हुन्छ, अधिक भोग वासनाबाट बच्दछ ।

समाजमा जब शोषकहरू बढे, दीन दुःखीहरूलाई सताउने तथा चाणूर र मुष्टिकजस्ता बलवान्‌हरू र दुर्जनहरूको पोषण गर्ने क्रुर राजा बढे, समाजले 'त्राहिमाम्' पुकार्न लागे । सबैतिर भय र आशंकाको घोर अन्धकार छायो। तब भाद्रपद महिनाको कृष्णपक्षको अन्धकारमयी अष्टमीमा कृष्णावतार भयो । जुन दिन उहाँ निर्गुण, निराकार, अच्युत, मायालाई वशमा गर्नुहुने, जीव मात्रका परम सुहृद प्रकट हुनुभयो, त्यस पावन दिनलाई 'जन्माष्टमी' भनियो ।

आवश्यक छैन भगवान् कृष्णको अवतार रातिको बाह्र बजे नै मनाउनु। श्रीकृष्णको अवतार महोत्सव त जहिलेसुकै पनि मनाउन सकिन्छ। उहाँको अवतार महोत्सव मनाउनुको अर्थ हो– श्रीकृष्णको आदर्श, श्रीकृष्णको संकेत जीवनमा ल्याउनु । हामीले भगवान् श्रीकृष्णको जय भन्यौं, फूल प्रसाद बाँड्यौं, सेवन गर्‍यौं, यति गर्दैमा अवतरण महोत्सव मनाउँदाको पूर्णाहुति हुँदैन । श्रीकृष्णमा जस्तो मधुरता र चित्तको समतालाई जीवनका तमाम तनावहरूका बीच रहेर बनाइरहने प्रयत्न हाम्रो हुनुपर्दछ । जन्माष्टमीले आफूभित्रको प्रेमलाई प्रकट गर्ने सन्देश दिन्छ । जति धेरै हामी आत्मनिष्ठामा अगाडि बढ्छौं, त्यति नै धेरै हामीले श्रीकृष्णको आदर गरेको हुन्छ र यही नै अवतरण महोत्सवको यथार्थता हो ।

जन्माष्टमीमा हामीले यस्तो संकल्प गरौं कि गीताको सन्देशलाई, योगको सन्देशलाई, आत्मज्ञानको अमृतलाई पिउन सकौं र जगतमा यस जगद्‌गुरुको प्रसादलाई बाँड्न सकौं ।

जय गुरुदेव !

# श्रीकृष्ण पूजन

*श्रीकृष्ण जन्माष्टमीको आफ्नै विशिष्ट महत्त्व रहँदै आएको छ । यस पर्वमा विशेष विधि-विधानपूर्वक भगवान् श्रीकृष्णको पूजन गर्न पाउनु जीवनकै सौभाग्य मानिन्छ । तसर्थ, सम्पूर्ण पाठकवर्गको लाभार्थ यस श्रीकृष्ण पूजन विधान यहाँ प्रकाशित गरिएको छ ।*

*श्रीकृष्ण जन्माष्टमीको पावन दिनमा भगवान् कृष्णको विशिष्ट पूजाको लागि आवश्यक सामग्री एकत्रित गरी बिहान वा राति जुन बेला तपाईं पूजा गर्न चाहनुहुन्छ, त्यसबेला स्नान गरेर पूजा कक्षमा पहेँलो वा सेतो आसन ओछ्याएर उत्तर या पूर्व दिशातिर मुख फर्काएर बसौँ । पूजनस्थलमा सेतो वस्त्र बिछ्याई त्यसमा भगवान् कृष्णको प्राण-प्रतिष्ठित फोटो अथवा उहाँको प्रतिमा र श्रीकृष्ण यंत्र स्थापित गरौँ । आफ्नो बायाँपट्टि धूपदीप बालौँ । यसपछि हात जोडेर भगवान् गणपतिको स्मरण गरौँ ।*

**प्रार्थना–**

**सुमुखश्चैकदन्तश्च कपिलो गजकर्णकः ।**

**लम्बोदरश्च विकटो विघ्ननाशो विनायकः ॥**

**धूम्रकेतुर्गणाध्यक्षो भालचन्द्रो गजाननः ।**

**द्वादशैतानि नामानि यः पठेच्छृणुयादपि ॥**

**विद्यारम्भे विवाहे च प्रवेशे निर्गमे तथा ।**

**संग्रामे संकटे चैव विघ्नस्तस्य न जायते ॥**

**संकल्प–**

दाहिने हातमा जल, अक्षता, पुष्प तथा कुंकुम लिऊँ–

**ॐ विष्णुर्विष्णुर्विष्णुः श्रीमद्भवतो महापुरुषस्य विष्णोराज्ञया प्रवर्तमानस्य अद्य श्री ब्रह्मणो द्वितीय परार्द्धे श्वेतवाराह कल्पे वैवस्वतमन्वन्तरे अष्टाविंशतितमे कलियुगे कलिप्रथमचरणे जम्बूद्वीपे भारतवर्षे अमुक मासे (महिनाको नाम) अमुक वासरे (बारको नाम) अमुक पुण्य तिथौ (तिथिको नाम) अमुक गोत्रीयः (आफ्नो गोत्रको नाम) अमुक शर्माऽहं (आफ्नो नाम भनौँ) अद्य भगवतो कृष्णस्य प्रीत्यर्थं यथा मिलितोपचारैः पूजनं करिष्ये ।**

जललाई जमीनमा छोडौँ ।

**कलश पूजन–**

कलशमा जल भरेर आफ्नो दायाँतर्फ स्थापित गरौँ र त्यसमा वरुण देवतालाई आह्वान गरौँ–

**सर्वे समुद्राः सरितस्तीर्थानि जलदा नदाः ।**

**आयान्तु देव पूजार्थ दुरितक्षयकारकाः ।**

यसपछि 'वं वरुणाय नमः' मंत्र उच्चारण गर्दै गन्ध, अक्षता र पुष्पलाई कलशमा राखेर तीर्थलाई आवाहन गरौँ–

**गंगे च यमुने चैव गोदावरि सरस्वति ।**

**नर्मदे सिन्धु कावेरि जलेऽस्मिन् सन्निधिं कुरु ॥**

**प्रसन्नो भव । वरदो भव । अनया पूजया वरुणाद्यावाहिता देवता प्रीयन्तां न ममः ॥**

**पवित्रीकरण–**

**ॐ अवपवित्रः पवित्रो वा सर्वास्थां गतोऽपि वा ।**

**यः स्मरेत् पुण्डरीकाक्षं सः बाह्याभ्यन्तरः शुचिः ॥**

**गुरु पूजन**

दुवै हात जोडेर गुरुदेवको ध्यान गरौँ–

**गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः ।**

**गुरुः साक्षात् पर ब्रह्म तस्मै श्री गुरवे नमः ॥**

यसपश्चात् गन्ध, अक्षता, पुष्प र धूप-दीपबाट पंचोपचार पूजन गरौँ । फेरि नजिकै रहेको भगवान् कृष्णको सुन्दर फोटो अथवा चित्र (प्रतिमा विग्रह) मा षोडशोपचार पूजन गरौँ –

**ध्यान**

**वंशी विभूषित करान्नव नील दाभात्,**
**पीताम्बरादरुण बिम्ब फलाधरोष्ठात् ।**
**पूर्णेन्दु सुन्दर मुखादर बिम्ब नेत्रात्,**
**कृष्णात् परं किमपि तत्त्वमहं न जाने ॥**
**श्रीकृष्णाय नमः ध्यानं समर्पयामि ।आसन**

पुष्प लिएर कुनै थालीमा आसनको रूपमा स्थापित गरौँ र त्यसमा श्रीकृष्ण विग्रह स्थापित गरेर निम्न मंत्रको उच्चारण गरौँ–

**रम्यं सुशोभनं दिव्यं सर्व समन्वितं,**
**आसनं च मया दत्तं गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः आसनं समर्पयामि ।**

**पाद्य**

श्रीकृष्ण विग्रहमा जल चढाऔँ–

**गंगोदकं निर्मलं च सर्व सौगन्ध्य संयुतम्,**
**पाद प्रक्षालनार्थाय दत्तं ते प्रतिगृह्यताम् ।**
**श्रीकृष्णाय नमः पाद्यं समर्पयामि ।**

**अर्घ्य**

अर्घ्यको जल आचमनीले श्री कृष्ण विग्रहमा चढाऔँ–

**अर्घ्य गृहाण देवेश गन्ध पुष्पाक्षतैः सह,**
**करुणाकर मे देव गृहाणाऽर्घ्य नमोऽस्तुते ।**
**श्रीकृष्णाय नमः अर्घ्यं समर्पयामि ।**

**आचमनीयम्**

आचमनीबाट तीनपटक जल विग्रहमा चढाउँदै निम्न मंत्रको उच्चारण गरौँ–

**सर्व तीर्थ समानीतं सुगन्धिं निर्मलं जलं,**
**आचम्यता मया दत्तं गृहीत्वा परमेश्वरं ।**
**श्रीकृष्णाय नमः आचमनीयं समर्पयामि ।**

**मधुपर्क**

काँश, चाँदी अथवा तामाको पात्रमा मह, घ्यू, दही मिलाएर विग्रहमा चढाऔँ–

**इदं मधुपर्क श्रीकृष्णाय निवेदयामि नमः ।**

**स्नान**

आचमनीबाट जल चढाउँदै निम्न मंत्रको उच्चारण गरौँ–

**वृन्दापन विहारेण श्रान्ते विश्रान्ति कारकं ।**
**चन्द्रपुष्कर पानीयं गृहाण पुरुषोत्तम ॥**
**श्रीकृष्णाय नमः स्नानं समर्पयामि ।**

**दुग्धस्नान**

**ॐ पयः पृथिव्यम्पयोऽषधीषु पयोदिव्यन्तरिक्षे**
**पयोधाः पयस्वतीः प्रदिश सन्तुमह्यम् ।**
**श्रीकृष्णाय नमः दुग्ध स्नानं समर्पयामि ।**

**दधिस्नान**

**ॐ दधिक्राव्णो अकारिषं जिष्णोरश्वस्य वाजिनः ।**
**सुरभि नो मुखाकरत् प्रण आयू (गूं) षितारिषत्**
**श्रीकृष्णाय नमः दधि स्नानं समर्पयामि ।**

**घृतस्नान**

**ॐ घृतं मिमिक्षे घृतमस्य योनिर्घृते श्रितो घृतमस्य धाम ।**
**अनुष्यधमावह मादयस्व स्वाहा कृतं वृषभवक्षि हव्यम् ॥**
**श्रीकृष्णाय नमः घृतं स्नानं समर्पयामि ।**

**मधुस्नान**

मह चढाउने–

**ॐ मधुव्वाता ऋतायते मधुक्षरन्ति सिन्धवः माध्वीर्नः सन्त्वोषधीः । मधुनक्तमुतोष सो मधुमत्पार्थिव (गूं) रजः । मधु-द्योरस्तुनः पिता मधुमान्नो वनस्पतिः मधुमानस्तु सूर्यः माध्वी र्गावो भवन्तु नः ।**
**श्रीकृष्णाय नमः मधु स्नानं समर्पयामि ।**

**शर्करा स्नान**

**ॐ अपा (गूं) रसमुद्वयस् (गूं) सूर्यसन्त (गूं) समाहितम् । अपा (गूं) रसस्य यो रसस्तं वो गृह्वाम्युत्तममुपयामगृहीतोसीन्द्राय त्वा जुष्टं गृह्वाम्येषते योनिरिन्द्राय त्वा जुष्टतमम् ।**
**श्रीकृष्णाय नमः शर्करा स्नानं समयर्पयामि ।**

**पंचामृत स्नान**

**ॐ पंच नधः सरस्वतीमपियन्ति सस्त्रोतसः ।**
**सरस्वती तु पंचधा सो देशेऽभवत्सरित् ।**
**श्रीकृष्णाय नमः पंचामृत स्नानं समर्पयामि ।**

यसपश्चात् भगवान् कृष्णको विग्रह तस्वीर वा यंत्रलाई शुद्ध जलबाट स्नान गराएर पुछौँ ।

**वस्त्र**

निम्न मंत्रको उच्चारण गर्दै उत्तम स्तरको पहेँलो वस्त्र भगवान्लाई पहिऱ्याऔँ–

**इदं परिधेय वस्त्रं उत्तरीयं वस्त्रं च श्रीकृष्णाय निवेदयामि नमः**

**आभूषण**

हार, मुकुट-मणि आदि गहना भगवान्लाई पहिऱ्याउँदै यस मंत्रलाई उच्चारण गरौँ–

**इमानि भूषणानि श्रीकृष्णाय निवेदयामि नमः ।**

**गन्ध**

केशर, कपूरमिश्रित चन्दन लिएर भगवान् कृष्णको निधारमा लगाऔँ–

**इमं गन्धं श्रीकृष्णाय निवेदयामि नमः ।**

**अक्षता**

**अक्षताश्च सुरश्रेष्ठ कुंकुमाक्तः सुशोभिताः**
**मया निवेदिता भक्तत्या गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय नमः अक्षतान् समर्पयामि ।**

**पुष्पहार**

नाना प्रकारका सुगन्धित पुष्प तथा पुष्प माला विग्रहमा चढाऔँ र निम्न मंत्रको उच्चारण गरौँ–

**इमानि पुष्पाति श्रीकृष्णाय निवेदयामि नमः ।**

**तुलसी दल**

तुलसी दलमा चन्दन लगाएर निम्न मंत्रको उच्चारण गर्दै चढाऔँ–

**इदं सचन्दनं तुलसीदलं श्रीकृष्णाय निवेदयामि नमः ।**

**धूप**

निम्न मंत्र पढ्दै धूप अर्पण गरौँ–

**इमं धूपं श्रीकृष्णाय निवेदयामि नमः ।**

**दीप**

श्रीकृष्णलाई दीप देखाऔँ–

**इमं दीपं श्रीकृष्णाय निवेदयामि नमः ।**

**नैवेद्य**

स्वच्छ थालमा भोज्य पदार्थ सजाएर भगवान्को सामु राखौँ, साथमा पानी पनि राखौँ र निम्न मंत्र उच्चारण गरौँ–

**ॐ क्लीं कृष्णाय गोविन्दाय गोपीजना वल्लभाय स्वाहा ।**

यसपश्चात् निम्न मंत्रको उच्चारण गरौँ–

**इदं नैवेद्यं श्रीकृष्णाय निवेदयामि नमः ।**

यसपश्चात् यस मंत्रबाट पाँचपटक आचमन गरौँ–

**ॐ प्राणाय स्वाहा । ॐ अपानाय स्वाहा ।**

**ॐ व्यानाय स्वाहा । ॐ उदानाय स्वाहा ।**

**ॐ समानाय स्वाहा ।**

**फल**

अनेक प्रकारका ताजा फल थालमा सजाएर भगवान्लाई अर्पण गरौँ–

**इदं फलं मया देव स्थापितं पुरतस्तव,**
**तेन मे सफला वाप्तिः भवज्जन्मनि जन्मनि ।**

**ताम्बूल**

भगवान्लाई पान, सुपारी आदि अर्पित गरौँ–

**एतत् ताम्बूलं श्रीकृष्णाय निवेदयामि नमः ।**

**पुष्पांजलि**

दुवै हातमा पुष्प लिएर भगवान् कृष्णलाई अर्पण गरौँ–

**नाना सुगन्ध पुष्पाणि यथा कालोद्भवानि च,**
**पुष्पांजलि र्मया दत्ता गृहाण परमेश्वर ।**
**श्रीकृष्णाय पुष्पांजलि समर्पयामि नमः ।**

**नमस्कार**

दुवै हात जोडौँ–

**कृष्णाय वासुदेवाय हरये परमात्मने ।**
**प्रणतक्लेशनाशाय गोविन्दाय नमो नमः ।**
**श्रीकृष्णाय नमः नमस्कारोमि ।**

यसपश्चात् निम्न मंत्रको तीन माला कुनै पनि मालाबाट जप गरौँ–

**॥ ॐ नमो भगवते वासुदेवाय ॥**

**विशेषार्घ्य**

निम्न मंत्रका साथ अर्घ्य दिने–

**अनया पूजया श्रीकृष्णः परमात्माप्रीयन्ताम् ।**
**ॐ तत्सद् ब्रह्माणर्पणमस्तु ।**

यसपछि भगवान् श्रीकृष्णको आरती सम्पन्न गरौँ । यसपश्चात् आफ्ना समस्त स्वजनहरूसँग प्रसाद ग्रहण गरौँ ।

# ऋषिपञ्चमी

भाद्रपद शुक्लपक्षको पञ्चमी 'ऋषिपञ्चमी' नामले चिनिन्छ। यस दिनको व्रतलाई 'ऋषिपञ्चमी व्रत' भनिन्छ। यो व्रत ज्ञात, अज्ञात पाप मुक्तिका लागि गरिन्छ। त्यसैले स्त्री पुरुष दुवैले यो व्रत लिन सक्दछन्। स्त्रीहरू रजस्वला (महिनावारी) भएको अवस्थामा घरका सामानहरू प्राय: स्पर्श हुन्छन्। तसर्थ यस पापबाट मुक्ति प्राप्तिको लागि उनीहरू यो व्रत बस्दछन्। यस व्रतमा सप्तर्षिलगायत अरून्धतीको पूजन हुनाले यसलाई ऋषिपञ्चमी भनिन्छ।

**व्रत विधान (व्रत बस्ने तरीका)**: यस दिन व्रतालुले बिहानदेखि मध्याह्नसम्म उपवास बसी, मध्याह्नको समयमा कुनै नदी वा तलाउमा जानुपर्छ। त्यहाँ अपामार्गको दतिवनले दाँत माझेर, शरीरमा माटो लगाएर स्नान गर्नुपर्छ। यसपछि पञ्चगव्य पिउनुपर्छ। त्यसपछि घर आएर गोबरले पूजा स्थान, आँगन लिप्नुपर्दछ। अनेक रङ्गबाट 'सर्वतोभद्रमण्डल' बनाएर त्यसमा माटो वा तामाको छड स्थापित गरेर त्यसलाई वस्त्रले सिङ्गारेर त्यसमाथि तामा अथवा माटोको भाँडामा जौ भरेर राख्नुपर्दछ। पञ्चरत्न, फूल, धूप अनि अक्षता आदिले पूजा गर्नुपर्दछ र यसरी सङ्कल्प गर्नुपर्दछ–

**अमुकगोत्रा, अमुकीदेवी अहं मम आत्मनो रजस्वालावस्थायां गृह भाण्डादिस्पर्शदोषपरिहारार्थं अरून्धतीसहितसप्तर्षिपूजनं करिष्ये।**

कलशको नजिकै अष्टदल कमल बनाएर त्यसमा कश्यप अत्रि, भारद्वाज, विश्वामित्र, गौतम, जमदग्नि तथा वशिष्ठ- यी सप्तर्षिहरू र वशिष्ठ पत्नी देवी अरून्धतीको षोडशोपचारपूर्वक पूजन गर्नुपर्दछ। यस दिन प्राय: दही अनि चामल खान्छन्। नूनको प्रयोग वर्जित छ। दिनमा एक छाक मात्र भोजन गर्नुपर्दछ।

कलश आदि पूजन सामग्रीहरू ब्राह्मणलाई दान दिनुपर्दछ। पूजनपछि ब्राह्मणलाई भोजन गराएपछि मात्र प्रसाद लिनुपर्दछ।

**कथा**

सत्ययुगमा श्येनजित् नाम गरेका एक राजा राज्य गर्दथे। उनको राज्यमा सुमित्र नाम गरेका एउटा ब्राह्मण बस्दथे जो वेदका विद्वान् थिए। सुमित्र खेतीपातीबाट आफ्नो र परिवारको जीविका चलाउँदथे। उनकी पत्नी जयश्री सती, साध्वी अनि पतिव्रता थिइन्।

एकपटक रजस्वला भएको बेलामा उनले अन्जानमा घरको सम्पूर्ण काम गरिन्, साथै पतिलाई पनि स्पर्श गरिन्। दैवभोगबाट पति-पत्नीको शरीरपात एक साथ भयो। रजस्वला अवस्थामा स्पर्शास्पर्शको ख्याल नगरेकाले स्त्रीले कुकुर्नी अनि पतिले गोरुको योनि प्राप्त गरे। तर पूर्वजन्ममा गरेको अनेक धार्मिक कर्मको कारण उनीहरूलाई ज्ञान भयो। संयोगवश यस जन्ममा पनि उनीहरू साथ-साथ आफ्नै घरमा आफ्नो छोरा अनि बुहारीको साथ बस्दथे।

ब्राह्मणको पुत्रको नाम सुमति थियो। उनी पनि पिताजस्तै वेदका विद्वान् थिए। पितृपक्षमा उनले आफ्ना माता-पिताको श्राद्ध गर्ने उद्देश्यले पत्नीलाई खीर बनाउन लगाई ब्राह्मणहरूलाई निमन्त्रणा दिए। त्यहाँ एउटा सर्पले आएर त्यो खीरलाई विषालु बनाइदियो। कुकुर्नी बनेकी ब्राह्मणीले यो सबै देखिरहेकी थिइन्। उनले सोचिन् कि यदि यो खीर ब्राह्मणहरूले खाए भने त विषको प्रभावले ब्राह्मणहरू मर्दछन्, अनि सुमतिलाई पाप लाग्नेछ। यस्तो सोचेर उनले सुमतिको पत्नीको छेउमा गएर त्यो खीर खाइदिइन्। यो देखेर सुमतिकी पत्नी एकदमै रिसाइन् र चुल्होबाट लठ्ठी निकालेर उक्त कुकुर्नीलाई पिटिन्। त्यस दिन उसलाई खान पनि दिइनन्।

राति भएपछि कुकुर्नीले गोरुलाई सबै घटना बताइन्। गोरुले भने कि आज त मलाई पनि केही खान दिएनन् जबकि मबाट दिनभर काम लिए। सुमति हाम्रो श्राद्ध गरिरहेको छ र हामीलाई नै भोकै राखेको छ।

यसरी हामी भोकै रहनाले त यो श्राद्ध व्यर्थ हुन्छ। सुमति ढोकामा अडिएर कुकुर्नी र गोरुको कुरा सुनिरहेको थियो। ऊ पशुको बोली बुझ्दथ्यो। उसलाई यो रहस्य थाहा पाएर धेरै दु:ख लाग्यो कि मेरा माता-पिता यस्तो योनिमा हुनुहुन्छ।

ऊ दौडँदै एउटा ऋषिको आश्रममा गयो अनि उसले आफ्ना माता-पिताले पशु योनी पाउनाको कारण र त्यसबाट मुक्तिको कारण सोध्यो। ऋषिले ध्यान अनि योगबलबाट सबै कुरा बताउनुभयो। ऋषिले सुमतिसँग भने कि तिमीहरू पति-पत्नी भाद्रपद शुक्लपञ्चमीका ऋषि पञ्चमीको व्रत गर र त्यस दिन गोरुद्वारा जोतिएर उब्जेको कुनै पनि अन्न नखानू। यस व्रतको प्रभावले तिमीहरूका माता-पिताले मुक्ति पाउनुहुनेछ। मातृ-पितृभक्त सुमतिले ऋषिपञ्चमीको व्रत गरे जसको प्रभावबाट उनका माता-पितालाई पशु योनीबाट मुक्ति मिल्यो।

यो व्रत शरीरद्वारा अशौचावस्थामा भएको स्पर्शास्पर्श तथा अन्य पापको प्रायश्चितको रूपमा गरिन्छ। यस व्रतबाट स्त्रीहरूको रजस्वला अवस्थामा स्पर्शास्पर्शको विचार राख्ने शिक्षा लिनुपर्दछ। साथै पुरुषहरूले पनि यस बेलामा संयमपूर्वक रहनुपर्दछ। जय गुरुदेव !

# हरितालिका तीज

हिन्दू महिलाहरूले मनाउने सबैभन्दा ठूलो पर्व तीज हो । तीज पर्व भाद्र शुक्ल द्वितीयादेखि मनाइन्छ । विवाह गरी आफ्ना (लोग्नेका) घर गएका छोरी-चेलीलाई तीज मान्न माइतीघरमा बोलाउने चलन छ । तीजको शुभारम्भ द्वितीयाका दिन विभिन्न परिकारका खाद्य सामग्री, मिष्ठान्न भोजन तयार गरी सबै छोरी-चेली जम्मा भई दर खाने र खुवाउने गर्दछन् । तृतीयाका दिनमा बिहान सबेरै स्नान गरी शुद्ध पवित्र भई निराहार व्रत बस्दछन् । दिनमा शिव मन्दिर, देवालयमा जम्मा भएर नाच-गान गर्दछन् । तीजको यस धार्मिक पर्व मनोरञ्जनसँग जोडिएको हुन्छ तापनि छोरी-चेलीहरूले वर्षभरि भोगेका दुःखसुखलाई तीजको गीतका रूपमा उतार्दै नाचेर मनोरञ्जन गर्दछन् । विवाहिता महिला प्रायः रातो पहिरन र गहनाले सजिएका हुन्छन् भने कन्याहरू पनि व्रत र नाचगानमा साथ दिइरहेका हुन्छन् । तीजमा लिएको यस निराहार व्रतका प्रभावले जन्म जन्मान्तरको पाप नाश भई पतिको आयु बढ्ने र कन्याले योग्य वर पाउने विश्वास गरिन्छ । तीजका दिन बेलुकी व्रतालुले शिवजी र कन्याको पूजा गरी फलाहार गर्दछन् ।

पञ्चमीको दिन सप्तर्षी पूजन गर्नुपर्ने भएकोले बिहान सबेरै प्रत्येक दिनको हिसाबले वर्षभरि (एक वर्षमा ३६५ दिन हुने भएकोले) को ३६५ पटक दतिवनद्वारा दाँत माझेर ३६५ पटक माटो र पानीले स्नान गरी पञ्चगव्य सेवन गर्नुपर्दछ । यस पञ्चमीलाई ऋषिपञ्चमी भनिन्छ । ऋषिपञ्चमीमा गौतम, भरद्वाज, वशिष्ठ, अत्रि, जमदग्नि, कश्यप र विश्वामित्र गरी सातजना ऋषिको पूजन गरिन्छ । साथमा अरुन्धतीको पूजा गरी सौभाग्यका सामान चढाइन्छ । वर्षभर महिनावारी (रजस्वला) को समयमा नारीबाट कुनै त्रुटि भएको भए पञ्चमी पूजा गर्नाले पापबाट मुक्ति पाइन्छ भन्ने विश्वास गरिन्छ । रजस्वला भएकी नारीलाई पहिलो दिन चाण्डाल्नी, दोस्रो दिन ब्रह्मघातिनी, तेस्रो दिन धोविनी र चौथो दिन स्नान गरेपश्चात् शुद्ध मान्ने गरिन्छ ।

उहिले विदर्भ देशमा उत्तङ नामका ब्राह्मणका एक छोरा र एक छोरी थिए, छोरो सानै उमेरमा वेदमा पारङ्गत भयो, छोरी पूर्वजन्मको पापले सानै उमेरमा विधवा भइन् । अचानक छोरीको शरीरभरि खटिरा आएर कीरा परेछन् । यस्तो वज्रपात किन भयो भनी विचार गर्दा अघिल्लो जन्ममा रजस्वला हुँदा छुवाछुत गर्ने, ऋषि पञ्चमी व्रतको अपहेलना गर्ने, तर पञ्चमी पूजा गरेको भने हेर्ने गरेको थाहा पाए । पूजा हेरेको पुण्यले उसको जन्म ब्राह्मण परिवारमा भएछ । यो थाहा पाई मातापिताले पञ्चमी व्रत गराए, तब उनी पाप मुक्त भइन् । पर्वतराज हिमालयकी पुत्री पार्वतीले महादेव पति पाउन कठोर व्रत, पूजा, आराधना गर्दै रहेकी थिइन् । यस्तैमा एकदिन नारदको सल्लाहअनुसार भगवान् श्रीविष्णुसँग पार्वतीको विवाह गरिदिने कुरा चलेको पार्वतीले थाहा पाई आफ्ना सखीहरूका साथ एकान्तमा गई लुकिन् । आलिका नाम गरेकी सखी (साथी) ले पार्वतीलाई भगाएर लुकाउन लगेकी हुँदा हरत + आलिका = हरितालिका, आलिकाले हरण गरेको हुँदा यस पर्वलाई हरितालिका तीज भन्ने गरिएको हो जुन कुरा पौराणिक कथाहरूमा पाइन्छ । जय गुरुदेव !

# गुरुवाणी

शिष्यलाई ज्ञान प्रदान गर्नका लागि शिव नै मानवशरीर धारण गरेर उसलाई पूर्णता प्रदान गर्दछन् ।

शिष्य जुन धरातलमा उभिएको हुन्छ, त्यसको बराबर अवस्थामा नै आएर ज्ञान प्रदान गर्न सकिन्छ । अत: शिष्य जुन स्थितिमा हुन्छ, गुरु पनि त्यही स्थितिमा आउँछन् ।

सद्‌गुरुको समीप बस्नाले नै मन आनन्दपूर्ण हुन जान्छ । गुरुको शरीर साधारण प्राणीहरूको शरीरजस्तै हुँदैन, उनको शरीर तपस्याको ऊर्जाले परिपूर्ण हुन्छ, जोसुकै साधक उनको सामीप्यता प्राप्त गर्दछ, ऊ आनन्दमय हुन जान्छ ।

शिष्यले अज्ञानतावश जन्म मृत्युलाई आफूमाथि आरोपित गर्दै भोग्दछ । गुरुले यस्तो मिथ्या ज्ञानलाई समाप्त गरेर शिष्यलाई उसको स्वरुपसित परिचित गराउँछन् ।

गुरु शिष्यका लागि सदैव वन्दनीय छन्, गुरु उसको आराध्यदेव हुन् । यस जीवनमा कुनै सम्बन्ध सत्य र स्वार्थरहित छ भने त्यो गुरु शिष्य सम्बन्ध हो ।

गुरु सदैव अत्यन्त करुणापूर्वक शिष्यको हितको लागि चिन्तित हुन्छन् । शिष्य अनेकौं जन्मदेखि भत्किँदै र संतृप्त छ । गुरुले नै उसलाई अध्यात्मलाई अध्यात्मतिर प्रेरित गर्दछन् ।

जब साधक समर्पणको सीमामा पुग्दछ तब गुरुका अतिरिक्त संसारमा उसलाई केहीको पनि आकर्षण रहँदैन, सारा संसारीक सम्बन्ध गौण हुन जान्छ । गुरु शिष्यको सम्बन्ध त देवताहरूका लागि पनि दुर्लभ छ ।

जब संसारमा सबै सम्बन्धी विपत्ति आएपछि शिष्यको साथ छोड्दछ भने गुरु नै उसका लागि सहायक सिद्ध हुन्छन् । यही उनको सबैभन्दा ठूलो चिनारीको स्वरुप हो ।

गुरुको निरन्तर चिन्तन गर्नाले साधकको बुद्धि गुरुको प्राणसित जोडिएर पवित्र हुन जाछ । तब गुरुको ब्रह्मय स्वरुप प्रकट भएर शिष्यको कल्याण गर्दछ ।

# गोरखवाणी

परब्रह्म, परमात्मा, अलख निरञ्जन महायोगी शिव गोरक्षका दिव्य वाणीभित्र समाहित गूढतम रहस्यहरू, आध्यात्मिक उन्नति, प्रगतिका नवीनतम मार्गहरू, साधनात्मक उच्चताका दिव्यतम विधिहरू सम्पूर्ण स्तरका व्यक्तिहरूका लागि उत्तिकै आवश्यक छन्, उत्तिकै आदरणीय छन् । महायोगीका दिव्यतम वाणीहरू गोरखवाणीका रूपमा विश्वविख्यात् छन् । परमतत्त्व परमात्माको वर्णन एवं व्यक्तिमा अन्तर्निहित शक्तिहरूको माध्यमबाट साक्षात्कार, आत्मसाक्षात्कार कसरी गर्न सकिन्छ भन्ने सम्बन्धमा उत्पन्न गहिराइ छुने, जीवनका वास्तविक मर्महरू झल्काउने यी दिव्य वाणीहरू सबैका लागि अनुकरणीय एवं मार्गनिर्देशक हुनेछन् भन्ने आशाका साथ प्रकाशन गर्दै आइरहेका छौं ।

**शष्या रहै गमाया जाय ।**
**सतिसति भाषंत श्रीगोरषराय ॥**
**येवै कहि दुसरै मानी गोरष ।**
**कहैं वो बड़ौं ग्यांनी ॥**

गुरु गोरखनाथ उपदेश दिँदै भन्नुहुन्छ– एक पक्षले ज्ञानोपदेश, गुरुज्ञान, गुरुवचनलाई उपदेश दिन्छन् अर्को पक्षले त्यसलाई स्वीकार गरी हुबहु लागू गर्दछन्, व्यवहारमा उतार्छन् । कुनै पनि वस्तुको संरक्षण गर्नाले नै सुरक्षित रहन्छ र त्यसलाई बेवास्ता गर्नाले अर्थात् त्यसलाई गुमाउनाले सदाका लागि आफ्नो हातबाट गुम्छ, यो व्यावहारिक सत्य हो । यसैले भन्नेवाला अर्थात् गुरुज्ञानसम्मत उपदेश दिनेवाला एवं उपदेशलाई जीवनमा उतार्नेवाला दुवै नै निःसन्देह उत्तमकोटिका ज्ञानी हुन् ।

**च्यंत अच्यंत ही उपजै ।**
**च्यंता सब जुग षीण ॥**
**जोगी च्यंता बीसरै तौ ।**
**होई अच्यंतहि लीन ॥**

साधानात्मकरूपमा अगाडि बढ्न चाहने सम्पूर्ण साधकहरू, चाहे योग मार्गलाई अँगालून्, चाहे आध्यात्मिक मार्गलाई अङ्गाल्ने हुन्, सबैलाई चिन्ता एउटा भयानक बाधा हो । चिन्ता अनायासै जन्मन्छ । बिनाकारण पनि यसले सताउन थाल्छ । कुनै पनि प्रकारको अभावको कारण चिन्ता जन्मिन्छ, चाहे दुःखको बेलामा होस् वा धारणा आदिबाट चिन्ताको उत्पत्ति हुन्छ । चिन्ताको अग्निमा जलिरहेको समस्त जगत् नैराश्यको स्थितिमा निर्बल, उदास, दुःखित, एवं मानसिकरूपमा कमजोर भइरहेका छन् । यो निर्विवाद छ कि योगीलाई चिन्ताले सताउँदैन किनकि उनीहरू

परमात्मा प्राप्तिको लागि अनुसन्धानमा तत्पर रहिरहेका हुन्छन् र परमात्माको आश्रय प्राप्त गरिरहेका हुन्छन् । यसैले योगीको जीवन जिउनुमा नै आनन्द हुन्छ । कारण उनीहरू चिन्तामा होइन, परब्रह्म शिवको चिन्तनमा ध्यान एवं विचारमा तल्लीन रहन्छन् ।

**गिरहीको ग्यांन अमली को ध्यान ।**
**बूचा को कान वेश्या को मान ॥**
**वैरागी अर माया स्यं हाथ ।**
**या पांचाको एको साथ ॥**

गृहस्थजीवनमा रहेर सधैं विषय प्रपंचमा मात्रै आसक्त रही त्यसैमा हराउनेले आत्मबोध गर्न सक्दैनन् । त्यस्तै अम्मलमा, दुर्व्यसनमा लिप्त हुनेले अम्मली पदार्थको त्याग गर्न सक्दैनन् । उनीहरूको ध्यान खालि त्यही चीज प्राप्तिको लागि तड्पिन्छ । दुर्व्यसनीहरूको जीवन सदाचारपरायण हुनै सक्दैन । त्यस्तै जो व्यक्ति पहिल्यै बुच्चो छ अर्थात् कान नै छैन, उसलाई कानको महत्त्व नै हुँदैन, उसले कानको महत्व बुझेकै हुँदैन । त्यस्तै वेश्या जति राम्री, सुन्दरी भए पनि, जति धेरै धन आर्जन गरे पनि समाजमा उसलाई प्रतिष्ठा पाउन गाह्रो हुन्छ । उसलाई एक सदाचारी गृहणीको जस्तो मान-सम्मान प्राप्त हुनै सक्दैन । त्यस्तै वैराग्यको पथमा अगाडि बढिरहेको विरक्त साधक मायाको जालमा लोक-संग्रहमा र धन आदिको संचयको प्रपंचमा पर्नै सक्दैन । विरक्तहरू मायामा आसक्त हुनाले नष्ट हुन्छन् । तसर्थ यो निश्चित एवं सत्य छ कि प्रपंचमा गृहस्थ, व्यसनी, बुच्चो, वेश्या, र मायामा फस्ने संन्यासी पनि अर्थात् विरक्त यी पाँच आफैँमा समानधर्मी छन्, आफ्नो मर्यादाबाट खाली छन्, यिनीहरूलाई कहिल्यै सम्मानित भन्न सकिँदैन ।

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको**
**कृपा, आशीर्वादस्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा**
**आश्रम भवन निर्माणमा सहयोग गर्ने**
**समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू**
**सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा**
**सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।**

## नवदुर्गा ड्राईभिङ्ग इन्स्टिच्युट ले.न.पा. -७, तालचोक

**यहाँ कार, मोटरसाइकल, स्कुटर तथा विभिन्न सवारी साधान सिक्नका लागि र बस, ट्रक, मिनिबस, ट्र्याक्टरको लाइसेन्स निकाल्ने सहयोगका लागि हामीलाई सम्झनुहोस् ।**

**-प्रो. परिवेश ओझा,कल्पना ओझा तथा सम्पूर्ण परिवार - खुदी ।**

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को
कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा
आश्रम भवन निर्माणमा सहयोग गर्ने
समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू
सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा
सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**डिल्लीराम पौडेल, प्रेम कुमारी पौडेल**
**तथा सम्पुर्ण पौडेल परिवार**
ले.न.पा. -१२ खुदी ।

**परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महायोगी गुरु गोरखनाथ एवं**
**परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज**को
कृपा, अनुकम्पास्वरूप कास्की जिल्ला लेखनाथ-१२ खुदीमा
आश्रम भवन निर्माणमा सहयोग गर्ने
समस्त समितिका पदाधिकारीहरू, साधकसाधिकाहरू, चन्दादाताहरू
सम्पूर्णको सहयोगमा निर्माण कार्य सफल भएकोमा
सबैलाई हार्दिक धन्यवाद दिँदै आश्रमको उत्तरोत्तर प्रगतिको कामना गर्दछौँ ।

**राम बहादुर गुरुङ, सावित्री**
**गुरुङ तथा सम्पुर्ण परिवार**
पोखरा-१० मिलनटोल

(सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित 'अद्वितीय युग पुरुष : डा.नारायण दत्त श्रीमाली' पुस्तकबाट साभार गरी क्रमिकरुपमा प्रकाशित सामग्री ।)

### पारदविज्ञान

रसायन क्षेत्र पनि पूज्यपादको योगदानबाट वञ्चित रहेको छैन । रसायनशास्त्रमा पनि उहाँमा असाधारण ज्ञान थियो । त्यसमा पारदविज्ञान उहाँको विशेष रुचिको विषय थियो ।

गुरु गोरखनाथ पारदको अप्रतिम आचार्य हुनुहुन्थ्यो । उहाँले यस विषयमा 'पारद पारस रहस्य' पुस्तकको समेत रचना गर्नुभएको थियो ।

पारद अथवा पारो आफैँमा एउटा महत्त्वपूर्ण रसायन हो । तरल अवस्थामा रहेको पारोलाई विभिन्न संस्कारहरू सम्पन्न गरेर ठोस रूपमा परिवर्तन गर्ने विधि शास्त्रहरूमा वर्णित भए पनि यससम्बन्धी ज्ञाताको भने अभाव नै छ । पारदविज्ञानसम्बन्धी उहाँमा अपूर्व ज्ञान थियो । पारदविज्ञानका १०८ संस्कारहरूको नाम र तिनीहरूको विधिलाई गुरुदेवले धेरै पटक स्पष्ट्याउनु भएको थियो ।

पारदलाई देवादिदेव भगवान् महादेवको वीर्य मानिन्छ ।

तरल अवस्थाको पारदलाई बाँधेर त्यसबाट शिवलिंगको निर्माण गर्नु अत्यन्त दुर्लभ कार्य हो । यस्तो शिवलिंगको सहजै निर्माण गरेर उहाँले आफ्ना शिष्यहरूलाई पारद शिवलिंग सहजै दिनुभएको छ । साना साना पारद शिवलिंगको निर्माणलाई त सामान्य रुपमा नै लिन सकिन्छ तर उहाँले २१ किलोको पारद शिवलिंगको समेत निर्माण गर्नुभएको छ ।

पारदबाहेक अन्य विभिन्न रसायनसम्बन्धी पनि उहाँले कार्य गर्नुभएको छ । विभिन्न रसायनसम्बन्धी विभिन्न प्रक्रियाहरूलाई उहाँले सिकाउनु भएको छ, प्रष्ट्याउनु भएको छ, प्रकाशित गर्नुभएको छ । एउटा धातुलाई अर्को धातुमा रुपान्तरित गर्ने विधिको उहाँले खोजी गर्नुभएको थियो र अपार जनसमूहको अगाडि उहाँले सफलतापूर्वक यस्तो गरेर देखाउनु भएको थियो कि रसायन क्षेत्रमा पनि ऋषिमुनिप्रदत्त ज्ञान विश्वमा अद्वितीय छ । उहाँको सानिध्यतामा उहाँका धेरै शिष्यहरूले रसायन ज्ञान प्राप्त गरेका छन् र तामालाई सुन बनाएर यस विधिलाई महत्ता र गौरव दिएका छन् ।

### पराविज्ञान

पराविज्ञानमा पनि गुरुदेवको देन अतुलनीय छ । उहाँका अनुसार निर्जीव मानवजीवनमा प्राण र चेतना प्रदान गर्ने विद्या नै

पराविद्या हो । यस विद्याको माध्यमबाट बिना अध्ययन हर विषयमा प्रामाणिकताका साथ ज्ञान प्राप्त गर्न सकिन्छ र हर विषयमा धाराप्रवाह रुपमा बोल्न सकिन्छ । आज विज्ञान तथा प्रविधिले धेरै विकास गरेको छ । मानवजीवनलाई धेरै सुख, सुविधाहरू प्रदान गरेको छ । तथापि विश्वब्रह्माण्ड रहस्य नै रहस्यले भरिएको छ र तिनलाई बुझ्न सक्नु विज्ञानको वशभित्र पनि पर्दैन । अध्यात्म नै एउटा यस्तो मार्ग हो जसको अवलम्बनद्वारा गूढ ब्रह्माण्डीय रहस्यहरूलाई बुझ्न सकिन्छ । यस सन्दर्भमा पराविज्ञानको अति नै महत्त्वपूर्ण स्थान रहेको छ । ब्रह्माण्डमा एकपटक उच्चरित भएका ध्वनिहरू र बनेका दृश्यहरू कहिल्यै मेटिँदैनन् र आज पनि पराविज्ञानको माध्यमबाट हजारौँ वर्ष पहिलेका संवादहरू सुन्न सकिन्छ र दृश्यहरू हेर्न सकिन्छ भन्ने तथ्यलाई गुरुदेवले पहिलोपटक सर्वसाधारणसमक्ष उद्‌बोध गर्नुभयो ।

तसर्थ, आज पनि महाभारत युद्धका दृश्यहरू देख्न सकिन्छ, भगवान् श्रीकृष्णको मुखारविन्दबाट उच्चरित भएको गीतालाई सुन्न सकिन्छ, भगवान् श्रीरामको बाल्यकाललाई देख्न सकिन्छ, ऋषिमुनिहरूको तपस्यालाई बुझ्न सकिन्छ ।

### सावर मंत्र

परमपूज्य सद्‌गुरुदेवले सावर साधनाको क्षेत्रमा अनगिन्ती कार्यहरू गर्नुभएको छ । आजको युगमा वैदिक साधनाहरूको नियम,

# परमपूज्य सद्‌गुरुदेवले

अनुशासन पालन गर्न कठिन हुने तथ्य महसुस गर्दै सरल तरीकामा, बिना कुनै विधि-विधान गर्न सकिने श्री श्री महायोगी गुरु गोरखनाथद्वारा प्रतिपादित सावर साधनाहरूलाई उहाँले जन-जनमा ल्याइदिनु भएको छ । सावर मंत्र जुनसुकै भाषामा पनि हुन सक्छन् । हेर्दा टेढामेढा, अनौठाजस्ता लाग्ने यी मंत्रहरूले आश्चर्यमय रुपमा काम गर्दछन् । यी मंत्रहरू शिघ्र फलदायी र कम संख्यामा जप गरे पनि पुग्ने हुन्छ । अति सरल र सहज भएकाले सावर मंत्र सर्वसाधारणको लागि अति नै उपयोगी मंत्र हुन् तथापि सावर मंत्र दुर्लभ र सर्वसाधारणको पहुँचभन्दा टाढा रहेको स्थिति थियो । यस्तो स्थितिमा गुरुदेवले सावर साधनालाई सबैका लागि सहज रुपमा प्राप्य बनाइदिनु भयो ।

गुरुदेवको साधनात्मक जीवनको एक हिस्सा गोरखपुर र नेपालमा बितेको छ । गुरुदेवले आफ्नो योग साधनाबाट पूर्वकालमा गुरु गोरखनाथले तपस्या गर्नुभएको र सावर मंत्रको रचना गर्नुभएको स्थान पत्ता लगाउनु भएको थियो । सन् १९९२ मा उहाँले गुजरात राज्यको पंचमहल जिल्लाको गोधरा भन्ने स्थानमा आफ्ना शिष्यहरूलाई सावर साधना गराँउदा यो रहस्योद्घाटन गर्नुभएको थियो कि त्यो क्षेत्रको कण-कण गुरु गोरखनाथको तपस्याले आपूरित छ तथा त्यहाँको वायुमण्डलमा आज पनि ती दिव्य ध्वनिहरू सुरक्षित छन् जुन पहिले गुरु गोरखनाथको श्रीमुखबाट उच्चरित भएका थिए । उहाँले सधैं नै गुरु गोरखनाथको सम्मान गर्नुभएको छ भने सावर साधनाको प्रभावकारितालाई धेरै नै महत्त्व दिनुभएको छ ।

गुरुदेवले समय समयमा सावर साधनाको शिविर सम्पन्न गराउनु भएको थियो । ८.५.८७ - १३.५.८७ सम्म सावर साधना शिविरको आयोजना गर्नुभएको थियो । त्यस्तै, मंत्र तंत्र यंत्र विज्ञान पत्रिकामा धेरै पटक सावर साधना विशेषांक प्रकाशन गर्नुभएको थियो । आधुनिक युगमा सावर मंत्रलाई जन जनको हातमा थमाउन गुरुदेवले महत्त्वपूर्ण भूमिका निर्वाह गर्नुभयो ।

# समाजलाई दिनुभएको योगदान

## कृतिहरूको अध्ययन गरौं

परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले विभिन्न विषयमा पाँच सयभन्दा बढी कृतिको रचना गर्नुभएको छ । तन्त्र, मन्त्र, यन्त्र, ज्योतिष, आयुर्वेद, हस्तरेखा विज्ञान, योग, ध्यान, साधनादिमा केन्द्रित उहाँका कृतिहरु एउटा प्रामाणिक दस्तावेजका रूपमा रहिरहेको छ । यी विषयहरुमा जानकारी प्राप्त गर्न चाहनेहरुका लागि यी कृतिहरु सदा धरोहरका रूपमा रहिरहने कुरामा कुनै संदेह रहन्न । उहाँका कृतिहरुको अध्ययन गरी यी विषयहरुमा अत्यधिक जानकारी हासिल गरौं ।

# आयुर्वेद भनेको यति मात्रै हो त?

## रक्तमोक्षण

रगतलाई शरीरबाट मुक्त गर्नु, निर्हरण गर्नु, निकाल्नु, बगाउने क्रियालाई नै रक्तमोक्षण भनिन्छ । हामीले यसभन्दा अगाडिका अङ्कमा वर्णन गरेका वमन, विरेचन, वस्ति, नस्य आदि पञ्चकर्मीय प्रमुख कर्ममा दोषहरूको शोधन प्रमुख उद्देश्य थियो भने रक्तमोक्षण कर्ममा दोषहरूको अपेक्षा धातु-रक्तको निर्हरण नै प्रधान विषय हो । रगत (रक्त) शरीरको एक अत्यन्त महत्त्वपूर्ण धातु हो । यो दुषित भएमा रगतलाई निकालेर व्यक्तिको स्वास्थ्य रक्षा हेतु रक्तमोक्षण विधि अत्यन्त आवश्यक मानिन्छ । रक्तलाई निकाल्ने समयमा दोषको अर्थात् पित्तदोषको पनि निर्हरण हुन्छ किनकि रक्त एवं पित्तमा आश्रयश्रयी भाव हुन्छ । तथा पित्त व्याधिहरूको लागि रक्तमोक्षण एक प्रधान उपायको रूपमा लिइन्छ । रक्तमोक्षण आशुफलप्रद (छिटो प्रभाव देखाउने) हुन्छ तर विधि-विधानमा भने अत्यन्त होशियार हुनुपर्छ । हामीले यस अघिको अङ्कमा रक्तमोक्षणको प्रकारमा पर्ने जलौका विधिको केही चर्चा गरेका थियौं, यस अङ्कमा त्यसैको बाँकी विषयको चर्चा गर्नेछौं ।

१) **जलौकाको उपचार :-** जलौकाको वा जुकालाई दंशास्थानमा सैंधव चूर्ण वा नुन पानी लगाएर हटाउनुपर्छ । फेरि जुकाको मुखमा सैंधव मिश्रित तेल मल्नुपर्छ र शरीरमा चामलको भुष मोल्नुपर्छ जसले गर्दा जुकालाई समाउन सजिलो होस् । फेरि बाँया हातको कान्छी औंलाले पुच्छरतिर बलियो गरेर समातेर दाँया हातको औंलाले बिस्तारै बिस्तारै पुच्छरबाट मुखतिर निचोड्दै जानुपर्छ । यसले गर्दा जुकाले रगतको वान्ता (वमन) गर्छ । वमनको राम्रो लक्षण (सम्यग् वमन) भएपछि जुकालाई जलपात्रमा छोड्नुपर्छ । यदि जुका कतै नचलिकन एकै ठाउँमा मात्र बस्दछ भने वान्ता सम्यक नभएको बुझ्नुपर्छ । तर यदि भक्ष्यको शोधनको लागि यता उता लाग्छ भने, घुम्न लाग्छ भने मान्नुपर्छ कि वमन राम्रो भयो अर्थात् सम्यग् वमनको लक्षण मानिन्छ । असम्यग् लक्षण देखिएमा पनि जुकालाई फेरि वमन नगराएमा, त्यो दुषित रगत ननिकालेमा जुकालाई 'इंद्रमद' नामक रोग (मद) हुन्छ जसको कारण जुका मर्न पनि सक्छ वा पुनः रक्तपान गर्न असमर्थ हुन्छ । साथै बढी वमन गराएमा पनि जुका मर्छ । त्यसैले उक्त जुकालाई अलग भाँडामा राख्नुपर्छ ।

**आतुर (विरामीको) उपचार :-** जुकामा भएको रक्तास्कंदी (anticoagulant) हिस्डीन (hirudin) नामक पदार्थको कारण जुकालाई देशस्थानबाट हटाए पनि रगत छिट्टै जम्दैन र बगिरहन्छ । तर छिटोभन्दा छिटो विरामीको रक्तस्राव बन्द गर्ने तथा व्रणरोपण (घाउ सन्चो) बनाउने उपचार गर्नुपर्छ । रक्तमोक्षणको योग, अयोग तथा अतियोगको लक्षणको लक्षण हेरेर शतधौत घृत (घ्यू) को दंशस्थानमा लेप लगाउनुपर्छ । साथै अभ्यंग गरेर शतधौत घ्यूको पिचु राख्नुपर्छ वा मधुले मालिश गरेर शीत परिषेक गरेर लेप लगाएर बंधन बाँध्नुपर्छ अर्थात् सम्यग् योगमा शतधौत घ्यूको अभ्यंग एवं पिचु राख्ने । हीनयोगमा जलौकाव्रण (घाउको) मधुद्वारा पीडन गर्ने तथा अतियोगमा शीत जलले परिषेक गरेर बन्धन बाँध्ने र मिथ्यायोगमा कषाय, मधुर, शीत औषधीको लेप गर्ने ।

यदि रगत बगिरहेमा जात्यादि तेलले व्रण बाँध्नुपर्छ । जुकाले एकपटकमा २ cc देखि १५ cc सम्म बढीभन्दा बढी रगत चुस्दछ र निकाल्दछ । यदि यो भन्दा बढी मात्रामा रगत निकाल्नु परेमा एउटा मात्र जुकाले नहुने हुनाले दुई वा सो भन्दा बढी जुकाको अर्थात् २, ४ वा ६ जुकाहरू लगाउन सकिन्छ । यदि जुकाले रगत खाइसकेपछि तुरुन्त रोगीको व्रण वा घाउबाट रगत रोकियोस् भन्ने लाग्छ भने, जुका निकालेपछि थोरै रगत जान दिने र व्रणमुखलाई कपासले (cotton) वा गजपिस (gauze piece सफा गरेर व्रणबंधन गर्नुपर्छ ।

**योग, अयोग, अतियोगको लक्षण :-**

१) अशुद्ध रगत निक्लिसकेपछि, जब शुद्ध रगत निक्लन थाल्छ तब कण्डु (चिलाउने) आदि लक्षण देखेर जुकालाई छुटाउनुपर्छ भन्ने मत आचार्य सुश्रुत एवं वाग्भटको छ । उहाँहरूले रगतको मान भने उल्लेख गर्नुभएको छैन ।

२) व्रण वा टोकेको ठाउँमा वेदना (पीडा) तथा लालिमा (रातोपना) शान्ति भएपछि (मुल वेदना) दुषित रगत निस्किएको लक्षण हो यो ।

**रक्तमोक्षण अयोग्य :-**

जसको सम्पूर्ण शरीरमा शोथ छ, जो रोगको कारण अत्यन्त दुर्बल भएको छ, गर्भिणी स्त्रीमा रक्तमोक्षण गर्नु हुँदैन, अम्ल आदि पदार्थ सेवनबाट उत्पन्न पांडु, अर्श, उदर शोथ आदिमा, बृद्ध, अत्यन्त रुक्ष शरीर भएको, धेरै परिश्रमबाट थाकेकोमा र दुब्लो पातलो व्यक्तिमा, रातिमा जागाराम बसेको व्यक्तिमा ।

**रक्तमोक्षण योग्य काल :-**

शरद ऋतु वा शरदकालमा रक्तमोक्षण गराउनु उचित मानिन्छ, जुन दिन न बढी हावा, न गर्मी भएको मौसममा, वर्षा ऋतुमा बादल नभएको बेलामा, ग्रीष्म ऋतुमा शीत समयमा (बिहान वा बेलुकी), हेमंत ऋतुमा मध्याह्नकालमा रक्तमोक्षण गराउनु पर्छ भन्ने विधान छ ।

वास्तवमा नै भन्ने हो भने रक्तमोक्षण, जलौका विधि अत्यन्त प्रभावकारी आयुर्वेदिक पञ्चकर्म विधि हो । लामो समयसम्म औषध खाएर पनि निको नभएका विभिन्न छालासम्बन्धी रोगहरूमा जलौका विधि अत्यन्त प्रभावकारी पाइएको छ ।

जय गुरुदेव !

हस्तरेखा विज्ञान

# हस्त परिचय

## धर्माचार्य :

धर्माचार्य

यदि कुनै मानिसको हातमा चोरी औँला साहिँली औँलाभन्दा लामो छ तथा गुरु पर्वतले पूर्ण विकास लिएको छ र त्यसमा क्रसको चिह्न छ भने त्यो व्यक्ति निश्चय नै एक सफल पुरोहित वा धार्मिक व्यक्ति हुन्छ ।

यदि माथि लेखिएको चिह्न छ र सूर्य पर्वत र सूर्य रेखा अति नै विकसित छ भने त्यो व्यक्ति प्रसिद्ध उपदेशक वा धर्माचार्य हुन्छ ।

माथि लेलिएका चिह्न छन् तथा जीवनरेखा काटिएको छ भने यस्तो व्यक्ति निश्चय नै संन्यासी हुन्छ र संन्यासी भएपछि नै उसलाई यश तथा सम्मान प्राप्त हुन्छ ।

## कलाकार :

कलाकार

जब कुनै व्यक्तिको हत्केला पूरा लम्बाइयुक्त छ तथा गाँठोरहित देखिन्छ भने एवं उसका औँलाहरू छड्केछ भने तथा औँलाका माथिका सिरा चुच्चो परेका छन् भने त्यो व्यक्ति सफल कलाकार हुन्छ ।

यदि माथि लेखिएका गुण छन्, साथै चन्द्र पर्वत पूर्ण विकसित छ भने त्यो व्यक्ति श्रेष्ठ चित्रकार मानिन्छ । यदि बुध पर्वत विकसित छ तथा बुध रेखा पनि पूर्ण लामो तथा निर्दोषरुपले बढेको छ भने त्यो व्यक्ति सफल संगीतज्ञ हुन्छ । यदि माथि लेखिएका गुण छन् तथा शुक्र पर्वत पूर्णरुपमा विकासमा छ भने तथा त्यसको क्षेत्र अत्यन्त फैलिएको छ भने त्यो व्यक्ति सफल नृत्यकार हुन्छ र प्रसिद्धि प्राप्त गर्दछ ।

यसका साथसाथै भाग्यरेखा तथा सूर्यरेखा जति धेरै स्पष्ट, गहिरो तथा यसले जति धेरै लालिमा लिएको हुन्छ, त्यो व्यक्ति त्यति नै धेरै सफल, लोकप्रिय तथा विख्यात हुन्छ ।

## साहित्यकार :

जुन व्यक्तिको हत्केलामा गुरु पर्वत तथा चन्द्र पर्वतले पूर्णरुपमा उभार लिएको देखिन्छ तथा सूर्यको औँला चोरी औँलाभन्दा लामो छ र औँलाहरूमा गाँठा छैनन् भने त्यो व्यक्ति एक सफल साहित्यकार हुन्छ ।

यसका साथसाथै सूर्यरेखा यदि लामो छ, निर्दोष छ तथा सूर्य पर्वत आफ्नो स्थानमा छ भने उसले लेखनको माध्यमबाट प्रसिद्धि प्राप्त गर्दछ ।

साहित्यकार

यदि माथिका गुण छन् र चन्द्ररेखा धनुषरुपमा भएर बुध पर्वततिर आइरहेको देखिन्छ भने त्यो व्यक्ति एक सफल कवि हुन्छ ।

यसका साथसाथै यदि भाग्यरेखा तथा मस्तिष्करेखा पूर्ण विकसित एवं स्पष्ट छ भने त्यो व्यक्तिले निश्चय नै आफ्नो क्षेत्रमा यश, सम्मान तथा प्रसिद्धि प्राप्त गर्दछ ।

## अभिनेता–अभिनेत्री :

यदि हत्केलमा सबै औँलाहरू कोमल तथा छड्के छन् तथा सूर्यको औँला विशेषरूपमा लामो छ तथा माथिबाट चुच्चो परेको छ भने तथा मस्तिष्करेखा एवं भाग्यरेखा पूर्णरूपमा लामा छन् भने त्यो मानिस एक सफल अभिनेता वा अभिनेत्री हुन्छ ।

अभिनेता

यदि सूर्यरेखा विशेषरुपले सुन्दर, लामो, स्पष्ट, मुलायम र निर्दोष ढंगले लामो छ भने त्यो व्यक्ति अद्वितीय कलाकार हुन्छ ।

यदि सूर्यरेखामा नक्षत्रको चिह्न छ भने त्यो कलाकार वा अभिनेत्री विश्वविख्यात हुन्छ ।

क्रमश:

**मेष** (चू, चे, चो, ला, ली, लु, ले, लो, अ):
शैक्षिक प्रगति, सन्तानबाट सुख प्राप्ति, मनमा भने डर, द्विविधा रहनेछ । व्यापार व्यवसायमा राम्रो प्रगति हुनेछ, स्वास्थ्यमा समस्या थपिएला । १ र ५ अंक शुभ, विजोडीबार शुभ, पूर्वोत्तरको शुभयात्रा, पहेँलो र रातो रङ शुभ रहनेछ ।

**वृष** (ई, उ, ए, ओ, वा, वी, वु, वे, वो):
सुख सुविधा थपिने छन्, खर्चमा भने अत्यधिक वृद्धि होला । वाणीमा सरस्वतीको वास रहनेछ । व्यापार फस्टाउनेछ, शैक्षिक प्रगति राम्रो रहनेछ । तर स्थान परिवर्तन भने हुने देखिन्छ । २ र ४ शुभ अंक, जोडीबार शुभ, दक्षिण पूर्वको शुभयात्रा, सेतो र खरानी रङ शुभ रहनेछ ।

**मिथुन** (क, की, कु, ध, ङ, छ, के, को, ह):
पराक्रम बढेर जानेछ, दाजुभाइको पूर्ण सहयोग मिल्नेछ । बोलीमा भने कमजोरीपन देखिन्छ । शिक्षामा प्रगति, व्यापार वृद्धि तर मन भने अशान्त रहने देखिन्छ । ३ र ७ अंक शुभ, विजोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, हरियो, निलो रङ शुभ ।

**कर्कट** (ही, हु, हे, हो, डा, डी, डु, डे, डो):
सरकारी जागिरमा प्रगति हुनेछ, शैक्षिक क्षेत्रमा लगानी वृद्धि हुनेछ । दाम्पत्यमा भने विवाद बढ्नेछ । कर्मस्थान परिवर्तन हुन सक्ला, दाजुभाइसँग मनमुटाव रहने देखिन्छ । २ र ४ शुभ अंक, जोडीबार शुभ, पूर्वोत्तरको शुभ यात्रा, खरानी र कलेजी रङ शुभ ।

**सिंह** (मा, मि, मु, मे, मो, टा, टि, टु, टे):
आत्मबल वृद्धि हुने, सरकारी कार्य बन्नेछन्, मुद्दा-मामिला पर्न सक्ला, व्यापार वृद्धि, बोलीको प्रभावले कार्य सिद्धि मिल्ने, पराक्रम बढेर जानेछ । १ र ८ शुभ अंक, विजोडीबार शुभ, रातो, निलो शुभ रङ, पूर्व दक्षिणको शुभ यात्रा ।

**कन्या** (टो, पा, पी, पू, ष, ण, ठ, पे, पो):
धनका नयाँ स्रोत खोलिनेछन्, बौद्धिक स्तरमा वृद्धि भएर जानेछ, जागिरमा पदोन्नति मिल्ने तर आलस्यताले कार्य हानि हुने देखिन्छ । ३ र ६ अंक शुभ, विजोडीबार शुभ, उत्तर पश्चिमको यात्रा, हरियो र निलो रङ शुभ रहनेछ ।

**तुला** (रा, रि, रु, रे, रो, ता, ति, तु, ते):
दाम्पत्यमा विवाद, पेटको रोग लाग्न सक्ने, नोकरीमा विवाद, झैझमेलामा परिने सम्भावना, व्यापारबाट भने राम्रो आम्दानी हुने देखिन्छ । ४ र ८ शुभ अंक, जोडीबार शुभ, खरानी र सेतो शुभ रङ, दक्षिण पश्चिम शुभ रहनेछ ।

**वृश्चिक** (तो, ना, नि, नु, ने, नो, या, यि, यु):
भाग्य वृद्धि हुनेछ, मनमा डर र चिन्ता भने रहने देखिन्छ । शत्रु नाश भएर जानेछन्, कर्म प्राप्ति मिल्नेछ र मान-प्रतिष्ठामा वृद्धि हुने देखिन्छ । १ र ९ शुभ अंक, जोडीबार शुभ, दक्षिण पूर्वको शुभ यात्रा, रातो र कलेजी रङ शुभ रहनेछ ।

**धनु** (ये, यो, भा, भी, भु, ध, फ, ढा, भे):
मन भने अस्थिर र शंकालु रहनेछ, जागिरमा पदोन्नति, व्यापारमा धनलाभ, दाजुभाइसँग मनमुटाव, चोटपटक लाग्न सक्ने, विद्युत र पानीबाट हानि हुन सक्ला । आर्थिक लाभ भने राम्रै हुनेछ । ३ र ९ अंक शुभ, विजोडीबार शुभ, रातो, पहेँलो शुभ रङ, उत्तर पश्चिमको शुभ यात्रा रहनेछ ।

**मकर** (भो, जा, जी, जु, जे, जो, ख, खि, खु, खे, गा, गि):
हानि हुने महिना देखिन्छ, रीसराग र घमण्ड बढेर जानेछ, घर बाहिर रहनु पर्ला, दाम्पत्यमा पनि विवाद खेप्नु पर्ला, भाग्यले भने साथ दिनाले अल्प लाभ मिल्ने देखिन्छ । २ र ८ अंक शुभ, विजोडीबार शुभ, दक्षिण पश्चिमको यात्रा, खरानी रङ शुभ ।

–ज्यो. हरिओम अधिकारी
'ज्योतिष भाष्करु

*(प्रस्तुत राशिफल सूर्य सिद्धान्तमा आधारित छ । राशिफल लेखक अधिकारीज्यूको सगरमाथा टेलिभिजनमा हरेक दिन बिहान ६:०० देखि ७:०० बजेसम्म कार्यक्रम 'ग्रहफल' प्रत्यक्ष प्रशारण हुन्छ ।)*

**कुम्भ** (गू, गे, गो, सा, सी, सू, से, सो, दा): जागिरमा स्थान परिवर्तन, शैक्षिक प्रगति, रोग, चोट र डरले डिप्रेशन रहनेछ । पेटको समस्या थपिएला । दाम्पत्यमा विवाद, झैझमेलामा पर्ने सम्भावना देखिन्छ । व्यवसायिक लाभ भने राम्रो रहनेछ । बिजोडी अंक ३, ७ शुभ, विजोडीबार शुभ, पूर्व उत्तरको शुभ यात्रा, निलो, कालो शुभ रङ ।

**मीन** (दी, दु, थ, झ, ञ, दे, दो, च, ची): धनमा बाधा, शिक्षामा प्रगति, सन्तानको चिन्ता, आँखा र शिरपीडा रहनेछ । जागिरमा प्रगति हुने, स्वास्थ्यप्रति धन खर्च हुने देखिन्छ । ३ र ५ अंक, बिजोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, पहेँलो निलो शुभ रङ ।

अस्तु । शुभम् ।

## सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरू

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, बिन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानो बानेश्वर, फोन: ०१-४४६४५४७
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनिभैरव), फोन: ०१-६९१२८२७
- **ललितपुर**, गोदावरी

अब यस लेखमा भुवनाध्वा वर्णन गरिन्छ । भूयते “भू” प्राप्तौ क्युन् प्रत्ययः । भूधातुको ‘प्राप्ति’ अर्थमा क्युन् प्रत्यय भएर “अन” आदेश भई भुवन बन्छ । भवन्ति उत्पद्यन्ते येन । करणे ल्युट् प्रत्ययः । जो हुन्छ (बन्छ) तथा जसबाट अरू उत्पन्न हुन्छ, त्यसलाई ‘भुवन’ भन्छन् । यसकारण यो अध्वमा सोम सूर्य आदि सबै पिण्डहरूको राम्रो वर्णन गर्नुपर्ने हो, तथापि ज्ञानको लागि सङ्क्षिप्तमा एक दुईको यथा ज्ञान वर्णन गरिन्छ । सोम सेलाएपछि त्यसबाट अनगिन्ती सूर्यहरू बनेको वर्णन अगाडिका लेखमा सङ्केत गरी सकियो । त्यै प्रकारले हरेक सूर्यहरूबाट पनि उछिट्टिएर अनेक पिण्डहरू बने । ती सबै सेलाएपछि सोमदेखि साना साना पिण्डहरूमा पनि कामबी( जको तत्त्व क्रियाशील भएर फैलियो । अनि मायारूप “ह्री” तत्त्वको बीज र त्रिपरसुन्दीरूप “श्री” तत्त्वको बीजरूप सोमको सोमरसमा परी अङ्कुर उत्पन्न भई ह्रीश्रीस्वरूप भएर शोभा बढायो । यस विषयमा सङ्केत गर्दै ‘गौरी कञ्चुकीयतन्त्र’ भन्छ–

**ह्रीश्रीस्वरूपिणी माया व्याप्ता सर्वमिदं जगत् ॥**

(अर्थ– ह्रीश्रीस्वरूपिणी मायाले यो सबै ‘संसार’ ढाकिएको छ । अब “ह्री” को विषयमा यस्तो सङ्केत छ–

सरति । “सृ गतौ” । सुवति षु प्रेरणे इति । अर्थ– जो सोमको आकर्षण शक्तिद्वारा खिँचिदै भुरुङ्जस्तै घुम्दै सोमतिर सर्दै जान्छ । जो फुटेर धेरै रूप भएर सर्दै जान्छ । ‘सुवति’ प्रेरणा गर्छ अरू पिण्डलाई आफूतिर आउन प्रेरणा गर्छ । यी अर्थहरूको वाचक सूर्यशब्द छ । यसैगरी “श्री” को विषयमा पनि आगम भन्छ–

**“प्रकाशश्च विमर्शश्च स्पन्दः सत्ता चितिः क्रिया**
**स्फुरत्तेति समाख्याता सा वै त्रिपुरसुन्दरी ।”**

अर्थ– प्रकाश, विमर्श, स्पन्द, सत्ता, चिति, क्रिया तथा स्फरत्ता भनेर भनिएको छ । यसमा धनशम्शेरज्यूले ‘श्री’को १०८ अर्थ हुन्छन् । तीमध्ये मैले जानेका मुख्य अर्थ यी हुन् भनी दिनुभएको छ– श्रयति हरिमिति श्रीः ॥१॥ श्रयति ब्रह्म इति श्रीः ॥२॥ श्रीयते सर्वैरितिश्रीः ॥३॥ श्रयति प्रकाशमितिश्रीः ॥४॥ श्रीयते सर्वः यथा सा ॥५॥

सूर्यहरू अनन्त बने, हरेक सूर्यको अधीनमा एकेक सौरजगत् छ, यसलाई ब्रह्माण्ड भन्छन् । यस विषयमा ‘आगम’ भन्छ–

**अनन्तकोटि ब्रह्माण्डनायिके परमेश्वरी ।**

सूर्यहरूमा तथा त्यसबाट चोइटिएका हरेक पिण्डहरूमा पनि आकर्षणशक्ति र मण्डूक रहन्छन् । हाम्रो सूर्यबाट पनि उछिट्टिएर धेरै साना पिण्डहरू बने, तीमध्ये पहिले दशतिर छरिएका १० टुक्रा पिण्डहरू “दश दिक्पाल” नामले र अरू यताउति छरिएका ‘ग्रह’ नामले प्रसिद्ध भए । तीमध्ये ठूलामा कुनै कुनैको ‘नाम’ पाइन्छ, साना सानाको पाइँदैन । साना साना पिण्डहरू चाँडै चाँडै नाशिने हुनाले तिनीहरूलाई “मर्त्य” र ठूला

ठूला पिण्डहरू धेरै कालसम्म ननाशिएर रहने हुनाले “अमृत” अथवा “अमर” को नाम भई देवता भनेर रूपकालङ्कारद्वारा मूर्त्तिसमेतको कल्पना भई पूजनीय बने । तिनीहरूबाट अनिष्टको नाश तथा इष्टको पुष्टि गर्ने तत्त्व बनाउने मन्त्रहरू पनि बन्न गए । हरेक सोमदेखि साना साना पिण्डहरू निम्न प्रकारले नाश हुन्छ ‘ह्री’ तथा ‘श्री’ बी( जको तत्त्व (हिस्सी) ले विश्वमा कान्ति गराएको छ । त्यो सधैं पंखा घुमे जस्तै दाहिने फन्को गरी घुमिरहन्छ, कामबीजको तत्त्व वामावर्त (बायाँ फन्को) गरी घुमिरहन्छ । जहाँ जुन बेला श्रीबीजको “श” तत्त्व कामबीजको “क” तत्त्वसँग संयोग हुन्छ, त्यो समयमा “श” तत्त्व “ष” तत्त्वमा बदलिएर “क” तत्त्वमा मिली “क्ष” रूप सम्वर्तक तत्त्व बन्छ । अनि पिण्डभित्र कालाग्निरुद्र प्रकोप हुन्छ । यसको अर्थ हो पिण्डभित्र उम्लिरहेका पदार्थहरू कालाग्निरुद्रको तातोपन बढेको असरले ज्वालामुखी बनेर बाहिर निस्केर पिण्डलाई ढाक्छ, पिण्डहरूको साना साना ठाउँमा यस्तो भैरहन्छ, त्यो ठाउँ बिग्रन्छ, त्यसको वरिपरि त्यसको धक्काले भूकम्पसम्म हुन्छ । पिण्डको बीच मर्मस्थलमा त्यस्तो हुन गएमा पिण्ड नै फुटेर टुक्रा-टुक्रा भएर त्यहाँ प्रलय हुन्छ, ती टुक्राहरू छरिएर बल्दै बल्दै गई आफ्नो नजीकको पिण्डमा खसी खरानी हुन्छ । हामीहरू तारा खसेको देख्छौं, त्यसको कारण यै हो । त्यै किसिमले अलि ठूलो खण्ड पिण्डबाट उछिट्टिई पिण्डको कलाको रूपमा हाम्रो पृथ्वीको चन्द्रमा रहे झैं रहन सक्छ । असङ्ख्य सोमहरू पनि हरनिमिष उत्पन्न हुँदैछन्, नाश हुँदैछन् तिनका पनि शिशु पिण्डहरूको गिन्ती गर्ने सकिँदैन । अतः अन्तरिक्ष (आकाशगङ्गा) मा पानी परेजस्तो गरी ताराहरू बर्सिरहन्छन् यसलाई ‘उल्कापात’ भन्छन् ।

अब ‘सोम’को अमृतको विचार गरिन्छ । सूर्यमा रहेको आकर्षणशक्तिमा कामबीजको प्रभाव पर्दा सोम-अमृतलाई कर्षण (खिँच्ने काम) गर्दा पानी थोपा परेको स्थलमा एकछिन दाग परेर बिलाए समान सूर्यमा पनि कहिले कतै कहिले कतै दाग पर्छ । यसकारण त्यसको नाम ‘आकृष्ण’ (आवर्तमानः कर्षति वा कर्ष्यते । इति आकृष्णः) भयो । त्यो चुहुँदा जति तलबाट चुहिइन्छ त्यति ‘जूँसः’ तत्त्वमा प्रभाव परी सोमको अमृत बढ्छ । यसकारण यो कहिले पनि घट्दैन । त्यो अमृत थोपा सूर्यमा परेको आवाज (नाद)

# परिचय–५

–योगी नित्यानन्द–

प्रकाशको किरणमा मिली "ह्वीश्री" (हिस्स्री) तत्त्व रश्मिद्वारा सबै आफ्ना आश्रित पिण्डहरूमा तथा सोमरस चाहिँ प्रणवको प्रभावले यथायोग्य कला (भाग) मा बाँडी पिण्डहरूका कलाहरूमा झर्छन्। कलाहरू भएकामा चन्द्रमामा तथा कला नभएका पिण्डहरूमा सोझै झर्छन्। 'स तत्त्व तथा विमर्शको तत्त्व "ह" मा प्रकाशको तत्त्व "अ" मिली "हा" तत्त्व हुन्छ। त्यसमा विशेष तेजतत्त्वस्वरूप "र" तत्त्व "ह्रा" तत्त्व नाद बिन्दुले युक्त भई मायाबीजको तत्त्वले स्वयम् बीचमा बसेर मिलाउँदा "ह्राँ माया स" को मन्त्रतत्त्व सूर्यमा उत्पन्न भएर प्रकाशको सात रङ (रज रञ्जयति 'भूरञ्जिभ्यां कित्" इत्यसुन् । रज्यतेऽनेन वा "रञ्जरागे" असुन्) इति रजस, अर्थात् रँगिने अथवा रँगाउने) को प्रतिविम्ब पर्न गयो र जल्जलाउँदो भयो। त्यसबाट उछिट्टिएर दुई दुई रंगबाट निर्मित स्पन्दि (जोर्नी) बाट चोइटिएर जोडसित घुमेकोले "वषट्" तत्त्वलाई साथमा ग्रहण गरी हरेक प्रथम तथा तृतीय रङ सम गराएर "वौषट्" तत्त्वलाई साथमा लिएर प्रणवतत्त्वले पिण्डहरू निर्माण गऱ्यो। मन्त्राङ्कका तत्त्वहरू "नमः", "स्वाहा", "फट्", "वषत्", तथा "विच्चे" गरी ६ वटा छन्। यिनका प्रभावले मन्त्रको रूप बनी मन्त्रको पुष्टि गर्छ। माथि बताइएका कारणले सात रज (रङ) सूर्यबाहेक अरूमा छैन। केवल फरक फरक दुई दुई रङ (रज) मात्रै छ। माया (मूल प्रकृति) ले आफ्ना रथ (भ्रमणकक्ष) सोम र सूर्यसहित सबै पिण्डलाई अक्षमाला तत्त्वक्रमले ल्याइदिइन्। "साधना समुच्चय" मा अक्षमालाको सङ्केत यसप्रकारको छः-

**श्रीमायाकामवाग्योगात् मातृकावर्णयोगतः**
**अनुलोम-विलोमाभ्यामष्टोत्तरशतं जपेत् ॥**

'क्ष'लाई सूर्य बनाई श्रीं ह्रीं क्लीं तथा मातृकावर्णहरूको अनुलोम विलोम योगबाट "अक्षमाला" बन्छ। यै नै पिण्डहरूको "रथ" संज्ञक साँध हो। (यहाँ रथशब्द रम्यते अत्र, रमन्ते च अनेन वा "रमु क्रीडायांकथन् प्रत्ययः। जसमा रमण गर्छन्, जसद्वारा रमण गर्छन् (डुल्छन्) भन्नाले पिण्डहरूको भ्रमण कक्षको वाचक छ)। ती सबै पिण्डहरू आफ्ना आफ्ना नियमित रथमा रहेर सूर्यको आकर्षणशक्तिद्वारा भुरुङ्जस्तै घुम्दै सूर्यतिर गइरहेका छन्, सूर्य पनि आफूबाट निस्केका सबै पिण्डहरूलाई साथमा लिई सोम (विश्वसोम) को आकर्षणशक्तिले खिँचिएर आफ्नो 'रथ' (कक्ष) मा रही भुरुङ्जस्तै घुम्दै सोमतिर गइरहेछन्। यसको रहस्यको सङ्केतको रूपमा भास्करको मूलमन्त्र भनी 'मेरुतन्त्र'को त्रयोदश प्रकाशमा उल्लिखित छ। यै मन्त्र (कण्डिका) शुक्लयजुर्वेदको ३३ अध्यायमा ४३ सौं तथा ३४ अध्यायको ३१ सौं कण्डिकाको रूपमा छ। त्यो मन्त्र हो–

**आकृष्णेन रजसा वर्तमानो निवेशयन्नमृतं मर्त्यञ्च।**
**हिरण्य येन सविता रथेनादेवो याति भुवनानि पश्यन् ॥**

बाह्यार्थ– आलो पालो गरी घुम्ने रातको लक्षणले युक्त भएका सूर्यदेवता तथा मनुष्यहरूलाई आफ्ना आफ्ना ठाउँमा राखेर सुनको रथमा बसेर भुवनहरूलाई बराबर हेर्दै हिँड्छन्। यस बाह्य अर्थ मात्र उव्वट महीधर तथा सायण भाष्यकारहरूले गरेका छन्। तर यो 'कण्डिका'को सांकेतिक आन्तर रहस्यार्थ अर्कै छ– (यसको ती ती अर्थका अन्वयहरूको लागि 'तान्त्रिक विज्ञान दर्पण' ९४-९६ पृष्ठ अध्ययन गर्नु) भावार्थः- आकृष्णंरूपदाग तथा सात रज (रङ) ले युक्त भएका आफ्नो कान्तिद्वारा ठूला र साना पिण्डहरूलाई आफ्ना आफ्ना नियमित ठाउँमा राखेर भुरुङ्झैं घुमिरहेका सबै पिण्ड उत्पन्न गर्ने सूर्य आफ्नो रथ (साँध) बाट सबै ती पिण्डहरूतिर हेर्दै सोमतिर जान्छन्। प्रकाशको प्रतिविम्बस्वरूप सूर्य भएकाले उनको हरेक पिण्डमा उनको रजको २/७ प्रतिविम्बरूप छ। यसैले हरेक पिण्डमा प्रकाश छ। तथापि आफू रहेको पिण्डको प्रकाश देखिन्छ अरू पिण्ड झल्केको देखिन्छ। यसमा कारण छ– हरेक पिण्डलाई त्यसको सामान्याकाशले बेरेको याने केही योजनसम्म घना वायुले बेरेको हुन्छ। सूर्यको आकर्षणशक्तिको प्रभावले सामान्याकाशमा वेगले घुम्दा त्यसबाट विद्युत (विजुली) निस्कन्छ। त्यसको संघर्षणबाट निस्केको नाद वाग्बीजमा परिणत हुन्छ। अनि त्यसको तत्त्व मायाबीजस्वरूप प्रकृतिको तत्त्वद्वारा पिण्डमा स्थित क्रियाशक्तिरूप कामबीजको तत्त्वमा लय हुन गई पिण्डभित्रको प्रकाश र उष्णतालाई भित्र गर्भमा लिई "विच्चे" तत्त्वले बाहिर पारी हटाइदिएबाट सामान्याकाशबाट केही पर भएपछि मात्र 'प्रकाश' देखिन्छ। प्रकाशको गतिभन्दा पनि मन र मन्त्रको गति छिटो भएकोले पूर्वोक्त सबै काम तुरुन्त हुन्छ। यसैले

ताराहरू एकनासले झल्केको देखिन्छ । यसकारण यो चण्डीको नवार्ण महामन्त्रलाई "सर्वमन्त्रप्रदीपकः" भनी ठूलो स्थान दिइएको छ । पूर्वोक्त प्रक्रिया पिण्डमा मात्र नभएर हरेक स्थावर जङ्गम प्राणीहरूसमेत यै विद्युच्छक्तिभित्र परेकाले चाहिने मात्र रही बढी भएका नाद बाहिर नादब्रह्ममा मिल्छ ।

उपरिवर्णित गति सूर्यादि ठूलो पिण्डदेखि मर्त्यसम्म उस्तै हुँदा हरेक पिण्डमा त्यहाँको वातावरण सुहाउँदो कुनै न कुनै किसिमका स्थावर जङ्गम प्राणीहरू छन् । हाम्रै पृथ्वीमा पनि जाडो मुलुकमा भएका प्राणीहरू गर्मी स्थानमा रहन सक्दैनन् । जलका प्राणी स्थलमा र स्थलको प्राणी जलमा जीवित रहन सक्दैनन् । यसकारण प्रकृतिको क्रीडा अपार हुनाले हरेक पिण्डमा त्यहाँकै वातावरण सुहाउँदो प्राणी हुने विषयमा सन्देह लिनु पर्दैन । सूर्यादि ग्रहको बा( ह्याकाशमा डरलाग्दो प्रकाश उष्णता देखिएता पनि पूर्वोक्त नवार्ण तत्त्वको प्रभावले पिण्डभित्रका कसैलाई पनि प्रकाश र उष्णताको विशेष असर पर्दैन । बलेको देखिने त सूर्यको सामान्याकाश हो, आफैँ सूर्य होइन । यसैगरी अरू पिण्डहरूको स्थिति छ ।

सोम (चन्द्रमा) तीन प्रकारका छन् । तीमध्ये आदिसोम (विश्वसोम) र कुबेर सोम ३ उपग्रह सोम यिनीहरूको अलग अलग मन्त्र 'भैरवतन्त्र'ले उल्लेख गरेको छ, अरूको पछि उल्लेख गर्नेछु, अहिले हाम्रो पृथ्वीको चन्द्रको विषयमा लेख्छु । अगाडि बताइएको प्रक्रियाले पृथ्वीमा खण्डप्रलय हुँदा एउटा सानो चोइटा उछिट्टिएर जाँदा 'चन्द्रमा' बन्न गयो । अरू पिण्डहरूमा जस्तै यो पनि आकर्षणशक्ति र मण्डूकले युक्त छ । यो पृथ्वीको आकर्षणशक्तिको प्रभावले आफ्नो रथ (कक्ष) मा रहेर पृथ्वीको चक्कर मारिरहन्छ । यसको नीजि रज (रङ) तथा प्रकाश छैन । त्यसकारण कालाग्निरुद्रको ताप ज्यादै थोरै छ । तथापि सूर्यको किरणको उष्णताले कुनै बेला प्रकोप भएर ज्वालामुखी फुट्छ तर चाँडै सेलाउँछ । सबै पिण्डमा आकर्षणशक्ति हुनाले परस्परमा आकर्षण भइरहन्छ, चन्द्रमा ज्यादै सानु भए पनि ज्यादै नजीक भएकोले आकर्षणशक्तिको वेगले समुद्रको छाल उर्लेको देखिन्छ । यसको आफ्नो प्रकाश नभएको तथा हिउँजस्तो वर्ण भएकोले सूर्यको किरण पर्दा ज्यादै चहकिलो देखिन्छ । त्यसबाट कालाग्निरुद्रको तापलाई सहयोग हुन्छ र पृथ्वीबाट झल्केको देखिन्छ । सूर्यको प्रकाशबाट ह्रीश्री तत्त्व सोझै पृथ्वीमा आउँछ । अमृत (सोमरस) चाहिँ चन्द्रमा झर्छ, चन्द्रमा भएको सूर्यको प्रकाशको किरणबाट पृथ्वीमा झर्छ, यसैले उपग्रह चन्द्रमालाई पनि 'सोम' भनिएको छ । चन्द्रको आफ्नो प्रकाश नभएकोले अरू ताराजस्तै सधैँ झल्किएको देखिँदैन । सूर्यको प्रकाश चन्द्रमाको आधा भागमा सधैँ परिरहन्छ । सूर्य र पृथ्वीको बीचमा चन्द्रमा पर्न जाँदा घाम नलागेको अँध्यारो भाग पृथ्वीबाट देखिन जान्छ, त्यो अवस्थालाई 'अमावास्या' (औँसी) तिथि भन्छन् । सूर्य र चन्द्रमाको बीचमा पृथ्वी पर्न जाँदा घाम लागेको पृथ्वीबाट देखिने हुँदा त्यो समयलाई पूर्णिमा भन्छन् । उज्यालो हुँदै जाने पक्षलाई शुक्लपक्ष र अँध्यारो हुँदै जाने पक्षलाई कृष्णपक्ष भन्छन् । एक पक्ष करिब १५ दिनको हुन्छ । यै तिथिलाई विमर्शको १५ किसिमको नाम तथा रूपले ग्रहण गरेर त्यै रूपको मन्त्रतत्त्वद्वारा हाम्रो पृथ्वीमा सोमरस (अमृत) को वर्षा भइरहन्छ । आफैँ महात्रिपुरसुन्दरी सबै योग्य भागमा विभाजन गराउँछिन् । ती सबै १६ भागलाई षोडश नित्या (तिथिनित्या) भनिन्छ । ती निम्न लिखितअनुसार छन्–

| **तिथिनित्या** | **शुक्लपक्ष तिथि** | **कृष्णपक्ष तिथि** | **वर्णतत्त्व** |
|---|---|---|---|
| कामेश्वरी | प्रतिपदा | अमावास्या | अं |
| भगमालिनी | द्वितीया | चतुर्दशी | आं |
| नित्यक्लिन्ना | तृतीया | त्रयोदशी | इँ |
| भेरुण्डा | चतुर्थी | द्वादशी | ईँ |
| वह्निवासिनी | पञ्चमी | एकादशी | उँ |
| महाविद्येश्वरी | षष्ठी | दशमी | ऊँ |
| शिवदूती | सप्तमी | नवमी | ऋँ |
| त्वरिता | अष्टमी | अष्टमी | ॠँ |
| कुलसुन्दरी | नवमी | सप्तमी | लृँ |
| विमला | दशमी | षष्ठी | ॡँ |
| नीलपताका | एकादशी | पञ्चमी | एँ |
| विजया | द्वादशी | चतुर्थी | ऐँ |
| सर्वमङ्गला | त्रयोदशी | तृतीया | ओँ |
| ज्वालामालिनी | चतुर्दशी | द्वितीया | औँ |
| विचित्रा | पौर्णमासी | प्रतिपदा | अँ |

यसमा 'अः' वर्णतत्त्व चाहिँ महात्रिपुरसुन्दरीमा मिलेर सबै स्थानमा र सधैँ व्यापक भएर रहन्छ ।

'सोम' भन्ने नामले ३ पिण्डलाई जनाउने कुरा माथि नै सङ्केत भइसक्यो । त्यसमा आदिको पिण्ड सोमलाई "सोम" (विश्वसोम) भनिन्छ । सूर्यको किरणको माध्यमबाट विश्वसोमबाट झरेको अमृत परी जसद्वारा पृथ्वीमा सोमरस चुहुन्छ त्यसलाई 'चन्द्रसोम', 'विश्वसोम'को ज्यादै नजीक रही सोझै सोमरस प्राप्त गर्ने पिण्डलाई 'कुबेरसोम' (दिक्पतिसोम) भन्छन् । यी तीनै पिण्डको वेदले अलग् अलग् कण्डिकाले वर्णन गरेको छ । भैरवतन्त्रमा आदिसोमको मूल मन्त्र भनी इमदेवा असपत्न ॐ (शुक्लयजुर्वेद अध्याय ९ कण्डिका ४० तथा अध्याय १० कण्डिका १८) लाई बताएको छ । यसको बाह्यार्थ उवट तथा महीधरका भाष्यमा हेर्नुहोला । रहस्यार्थ यस प्रकार छ– हे देवस्वरूप पिण्ड हो ! यी तिमीहरूका रक्षक राजा सोम हाम्रा, हामी जीवहरूका पनि मालिक हुनाले ठूलो सम्पत्ति, इज्जत तथा सम्मानको लागि पिण्डमा टिक्नको लागि ओज (अमृतात्मक ह्रीश्री) को लागि यी सोम तथा विकर्षणात्मक तत्त्वलाई मूल प्रकृति तथा सबै प्राणीहरूको निमित्त निर्विरोधी गराउने प्रेरणा गर । सङ्क्षिप्त भावार्थ– पिण्डहरूलाई आफ्नो आफ्नो स्थान नछोडी सोमको सुरक्षा गर भनिएको छ । यस कण्डिकाबाट थाहा हुन्छ विश्वसोम हाम्रै सौरजगत्भन्दा धेरै ठूलो

स्वरूपका छन्, उनमा प्रार्थना गर्न ठूला आकारका पिण्डहरूलाई सहयोग माग्नु पऱ्यो । उनबाट सम्पत्ति, सम्मान, पिण्डको स्वामित्व, ओज, सोमबाट सोमरस तथा प्रकाशको माध्यमबाट अगाडि बताए झैं मूलप्रकृति, विकर्षणाकर्षण तत्त्व र प्राणीहरू बन्छन् ।

मेरुतन्त्रमा त्रयोदश प्रकाश ५७२ श्लोकमा ग्रह चन्द्रको मूलमन्त्र भनेर बताएको कण्डिका यस्तो छ–

**"आप्यायस्व समेतु ते विश्वतः सोमवृष्ण्यम् ।**

**भवावाजस्य सङ्गथे ।**

शुक्लयजुर्वेद अध्याया १२, कण्डिका ११४ ।

रहस्यार्थः– हे चन्द्र ! तिम्रो निमित्त सूर्यको किरणबाट सोमरस (अमृत) जम्मा होस्, आप्लावित (परिपूर्ण) होऊ, आलोपालो गरी उब्जिरहने अन्न (खानेकुरा) हामी पाऔँ । यस मन्त्रबाट बुझिन्छ, चन्द्र (उपग्रह) सूर्यको किरणबाहेक अरू नहुँदा स्वयं प्रकाश छैन । सूर्यका किरणबाट आएको सोमरस यहाँ चुहाएर अनाजको उत्पादन गराउने हुँदा यसलाई पनि 'सोम' भनिएको छ ।

भैरवतन्त्रमा कुबेरको मूलमन्त्र भनेर बताएको कण्डिका यस्तो छः–

**सोमो धेनुम् सोमो अर्वन्तमाशु सोमो वीरं कर्मण्यं ददाति**

**सादन्यं विदथ्यं सभेयं पितृश्रवणं ददाशदस्मै ।**

शुक्लयजुर्वेद ३४ अध्याय, कण्डिका २१ ।

रहस्यार्थ– जुन विश्वसोमले कुबेरलाई हलचल गर्न, जान्ने बुझ्ने, बोल्न सक्ने, सुन्न सक्ने शक्ति भएको सोमरस चुहाउँछन्, पुष्टि दिन्छन्, प्रकाश दिन्छन्, वीर्य र काम गर्ने बल पनि दिन्छन्, अर्थात् संक्षिप्तमा भन्दा विश्वसोमबाट नै कुबेरले सोमरस तथा प्रकाश प्राप्त गर्छन् । यस कण्डिकाबाट थाहा हुन्छ, कुबेर सोमको ज्यादै नजीक तथा सूर्यबाट धेरै टाढा हुनाले सूर्यको प्रकाशसम्म पनि यसमा पुग्दैन । केवल आपसमा सूक्ष्म आकर्षण अरू प्रकाशादि प्रयोजन छैन । विश्वसोमका स्वकीयजस्तै ज्यादै नजीक रहेकोले यो कुबेर पिण्डलाई पनि 'सोम' भन्ने संज्ञा भयो । 'यास्क'ले वेदको हरेक कण्डिकाहरूको तीन अर्थ हुन्छ अर्थात् आध्यात्मिक, आधिदैविक, आधिभौतिक रूप अर्थ हुन्छ भनी बताउनु भएको छ । आजभोलि वेद पढ्ने व्यक्ति पाउन दुर्लभ भइसक्यो, त्यसमा पनि बाह्यार्थ गर्ने थोरै छन्, तीनै थरी अर्थका ज्ञाता अति दुर्लभ भइसक्यो, यसमा पनि धनशम्शेरजस्ता रहस्यार्थवित्हरू पनि धमाधम पृथ्वी छोड्दै हुनुहुन्छ, त्यसमा अलिकति भए पनि पछिका विद्वान्हरूलाई जिज्ञासा होस्, अनुसन्धानको प्रेरणा जागोस् भनी लेखमा उल्लेख गरेको छु । यहाँ केहीको दिग्दर्शन गराउने काम मात्र भयो । यसप्रकारले भुवनको सामान्यकाश अब अर्को लेखमा मन्त्र विद्यारहस्यको विषयमा लेख्नेछु । क्रमशः

## भाद्र महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| भाद्र १ गते | **तान्त्रोक्त बाघभैरव हवन** |
| | पुत्रदा एकादशी |
| भाद्र ३ गते | **श्री शिवगोरक्ष हवन** |
| भाद्र ४ गते | **तान्त्रोक्त वटुक भैरव हवन,** |
| | **तान्त्रोक्त गणपति हवन,** |
| | **तान्त्रोक्त चण्डेश्वरी हवन** |
| भाद्र ५ गते | **गोरक्ष प्रकट तिथि** |
| | **दिव्य गुरु महोत्सव** |
| | **तान्त्रोक्त महालक्ष्मी हवन,** |
| | **तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| | जनै पूर्णिमा |
| भाद्र ६ गते | **तान्त्रोक्त बगलामुखी हवन,** |
| | **तान्त्रोक्त वेदव्यास हवन** |
| | गाई जात्रा |
| भाद्र १२ गते | श्रीकृष्ण जन्माष्टमी |
| | गोरखकाली पूजा |
| भाद्र १६ गते | अजा एकादशी |
| भाद्र २० गते | कुशे औँसी (पिता सम्मान दिवस) |
| भाद्र २३ गते | तीजको व्रत |
| भाद्र २५ गते | ऋषिपञ्चमी |
| भाद्र २७ गते | महालक्ष्मी व्रतारम्भ |
| भाद्र २८ गते | गोरखकाली पूजा |
| भाद्र ३० गते | हरिपरिवर्तिनी एकादशी |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे- गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे- आरती**

## हार्दिक श्रद्धाञ्जलि

**जन्मः २०४७।१२।१६** (स्व. गम्भीरा थापा) **मृत्युः २०७०।०४।३०**

यस आश्रमकी साधिका कार्यकर्ता गम्भीरा थापाको असामयिक निधनप्रति समवेदना प्रकट गर्दै मृतात्माको चीर शान्तिका साथै शोकाकुल परिवारजनमा धैर्य धारण गर्न सक्ने शक्ति मिलोस् भनी परमपूज्य सद्गुरुदेवहरूको श्रीचरणकमलमा हार्दिक प्रार्थना गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल,**
**सम्पर्क कार्यालय तीनकुने**

# शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा

*वराहमिहिरले शताब्दियौँपूर्व कालगणना गरेर यो सिद्ध गरेका थिए कि प्रत्येक दिन मानिसको शुभ र अशुभ दुवै प्रकारका समय आउँछन् र कालज्ञानअनुसार शुभ समयमा कार्य गरेमा निश्चय नै कार्यमा सफलता प्राप्त हुन्छ।यद्यपि ज्योतिषमा दिशासूल, योगिनी, चन्द्रमा आदिको उल्लेख छ र यो पनि बताइएको छ कि यी सबैलाई ध्यानमा राखेर नै शुभकार्य प्रारम्भ गर्नु पर्दछ।महिराचार्यका अनुसार यदि हामीलाई कालज्ञान छ भने यी कुराहरूलाई ध्यानमा राख्नु आवश्यक छैन किनकि कालज्ञान आफैँमा अत्यन्त महत्त्वपूर्ण छ।यसैले यसमा व्यतिपात, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन।यात्रा, विवाह, भेटघाटलगायतका कुनै पनि शुभकार्य प्रारम्भ गर्दा कालज्ञानअनुसार गरिएमा ती कार्यहरू सफल हुन्छन् भनेर मिहिराचार्य भन्दछन्।*

*प्रस्तुत शुभ समयहरू (सर्वश्रेष्ठ तथा श्रेष्ठ) परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णयु नामक हिन्दी ग्रन्थमा आधारित रहेर तयार पारिएको हो।*

**२०७० भाद्र ३०, २, ९, १६ र २३ गते आइतबार**

**सर्वश्रेष्ठ– दिन ६:००–६:४८, रात्रि ६:४८–७:३६, ३:३६–४:२४**

**श्रेष्ठ– दिन ६:४८–१०:००, रात्रि ८:२४–१०:००, ४:२४–६:००**

**२०७० भाद्र ३१, ३, १०, १७ र २४ गते सोमबार**

**सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२**

**श्रेष्ठ– दिन ६:००–७:२४, १०:४८–१:१२, ३:३६–५:१२**

**रात्रि ९:१२–१०:००, १:१२–२:४८**

**२०७० भाद्र ४, ११, १८ र २५ गते मंगलबार**

**सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२, ३:३६–४:२४**

**श्रेष्ठ– दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२**

**रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:००**

**२०७० भाद्र ५, १२, १९ र २६ गते बुधबार**

**सर्वश्रेष्ठ– दिन ३:३६–४:२४, रात्रि ९:१२–१०:४८**

**श्रेष्ठ– दिन ७:३६–९:१२, ११:३६–११:५४, ४:२४–६:००**

**रात्रि ६:४८–९:१२, २:००–६:००**

**२०७० भाद्र ६, १३, २० र २७ गते बिहीबार**

**सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२**

**श्रेष्ठ– दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००**

**रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२४–६:००**

**२०७० भाद्र ७, १४, २१ र २८ गते शुक्रबार**

**सर्वश्रेष्ठ– रात्रि १:१२–३:३६**

**श्रेष्ठ– दिन ६:४८–१०:२४, ४:२४–५:१२**

**रात्रि ८:२४–१०:४८, ४:२४–६:००**

**२०७० भाद्र १, ८, १५, २२ र २९ गते शनिबार**

**श्रेष्ठ– दिन १०:३६–१२:२४, ३:३६–५:१२**

**रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:००**

---

***नोट: दिन भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म***
***रात्रि भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म***

सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र खुदीको भवन उद्घाटन एवं शिव साधना शिविर कार्यक्रममा सम्पन्न गतिविधिहरू : भव्य शोभायात्रा (१), शोभायात्रामा साप, सामा, काठमाडौं, गोरखाबाट सहभागीहरू (२), शोभायात्राको दृश्य (३), खुदी आश्रम विशेषको रूपमा प्रकाशित गोरक्ष निखिल वाणीको लोकार्पण (४), शोभायात्रामा सहभागी बाद्य समूह (५), साप एवं सामाज्यूबाट भवनको शिलान्यास हुँदै (६) र शिव साधनाको क्षण (७) ।

सिद्धाश्रम शक्ति केन्द्रबाट सम्पन्न गतिविधिहरू : दिव्य गुरु महोत्सव (१–२), तान्त्रोक्त वटुक भैरव हवन (३), तान्त्रोक्त महालक्ष्मी हवन (४), तान्त्रोक्त बगलामुखी हवन (५), दिव्य गुरु महोत्सव, हटौडा आश्रम (६), सम्पर्क कार्यालय तीनकुनेबाट आयोजित वार्षिकोत्सव कार्यक्रम (७–८)।

## गुरु पूर्णिमा पर्व

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्रले गुरु पूर्णिमालाई भव्य एवं दिव्यरुपमा मनाउने गर्दै आइरहेको छ । यसै क्रममा गत श्रावण ७ गते अग्रवाल भवन, कमलपोखरीमा आयोजित गुरु पूर्णिमा कार्यक्रमलाई हर्षोल्लासपूर्वक सम्पन्न गरेर गुरु-शिष्य परम्पराको निरन्तरतालाई प्रत्येक वर्ष संरक्षण गरेको छ । गुरु पूर्णिमा कार्यक्रमको शुभारम्भ निखिल स्तवन र गोरक्ष स्तवनको सस्वर पाठबाट भएको थियो । कार्यक्रममा पूजन, हवन, भजनकीर्तन, नृत्य, लाख बत्ती प्रज्ज्वलन, प्रवचन आदि कार्यक्रमहरू पनि सम्पन्न भएका थिए ।

कार्यक्रममा आफ्नो मन्तव्य व्यक्त गर्नुहुँदै सावरपन्थी सदस्य श्री रामजी अर्यालले भगवान् शिवलाई कृपा, आशीर्वाद दिनुहुने गुरु गोरखनाथलाई हामीले बुझ्न बाँकी रहेको बताउनु भयो । उहाँले मन्त्र-तन्त्र-यन्त्रका अन्तिम नाम स्वामी श्री निखिलेश्वरानन्दको प्रसंग अघि बढाउँदै अबको समय भनेको गोरक्ष निखिल युगको हो भन्नुभयो । उहाँले हामी कमजोर आत्मा नभएको पुष्टि गर्नुहुँदै गुरुहरूकै कृपाले हामीले जीवन पाएको बताउनु भयो ।

मन्तव्यकै क्रममा सावरमातृका श्री विन्देश्वरी बरालले चारैतिर अविश्वसनीयता र अशान्तिको माहौलमा सद्‌गुरुदेवद्वयलाई मात्र विश्वास गर्न सकिने बताउनुभयो । उहाँले गुरुहरूले हामीलाई सम्पूर्ण कुराहरूबाट संरक्षण प्रदान गर्नुहुन्छ भन्नुहुँदै गुरु पूर्णिमा कार्यक्रम संचालनको दौरानमा गुरुत्वशक्ति नै संचार भइरहेको पनि बताउनु भयो । उहाँले सिद्धाश्रम शक्ति केन्द्रलाई गुरुदेवहरूले विश्वास गर्नुभएको बताउनु भयो ।

चर्या नृत्य, चुड्का भजनलगायत विविध प्रस्तुतिले पनि कार्यक्रमलाई थप रौनक बनाएको थियो । उक्त कार्यक्रममा सम्पर्क कार्यालय तीनकुने, भक्तपुर तथा गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमबाट नृत्य प्रस्तुत भएको थियो । केन्द्रबाट चुड्का भजन प्रस्तुत भएको थियो ।

गुरुसेवा दलका साधक दिनकुमार के.सी. ले कार्यक्रममा संस्थाको तर्फबाट स्वागत मन्तव्य दिनुभएको थियो ।

## सम्पर्क कार्यालय तीनकुनेको छैठौं वार्षिकोत्सव

श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा, अनुकम्पा एवं आशीवार्दस्वरुप सम्पर्क कार्यालय तीनकुनेको छैठौं वार्षिकोत्सव गत श्रावण १२ गते मनाइयो । बिहान १०: ३० बजे सद्‌गुरुदेबहरूको स्तुति-बन्दनाबाट शुभारम्भ भएको उक्त कार्यक्रमको प्रथम सत्रमा स्तुति-वन्दना, गुरु पुजन, मन्त्रजप, गुरु आहावन भजन सम्पन्न भएका थिए भने दोस्रो सत्र सम्पर्क कार्यालय तीनकुनेका संयोजक साधक दिनकुमार के.सी. को स्वागत मन्तब्यबाट शुभारम्भ भएको थियो । दिनभर भजनकीर्तन गरी मनाइको उक्त वार्षिकोत्सवमा धापाखेल आरती संचालन केन्द्रबाट सहभागी साधकहरू शिवराम बानिया र सरोज महर्जन तथा उक्त आ.स.के को भजन समूहले निकै मीठो भजन प्रस्तुत गर्नुभएको थियो ।

यसैगरी सम्पर्क कार्यालय तीनकुनेबाट भजनका साथै नृत्य पनि प्रस्तुत भएको थियो । यसै क्रममा सम्पर्क कार्यालय तीनकुनेको वार्षिक प्रतिवेदन साधक सुदेश ढकालले पेश गर्नुभएको थियो भने गुरुसेवा दलका सदस्य भुपेन्द्र गिरीले गुरुदेव र गुरुकार्यसम्बन्धी प्रकाश पार्नुभएको थियो । कार्यक्रममा सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय गोरखाका संयोजक साधक किशोर अकेलाले पनि शुभकामना दिनुभएको थियो । सिद्धाश्रम शक्ति केन्द्र नेपालका संयोजक सावरपन्थी सदस्य श्री रामजी अर्याल र सावरमातृका विन्देश्वरी बरालज्यूको कार्यक्रममा उपस्थिति रहेको थियो । सावरपन्थी अर्यालले आध्यात्मिक विषयमा प्रकाश पार्नुभएको थियो । उहाँले सम्पर्क कार्यालय तीनकुनेको उत्तरोतर प्रगतिको कामना पनि गर्नुभयो । उक्त अवसरमा सावरमातृका साधिका बरालले गुरुदेव र गुरुकार्यको विषयमा प्रकाश पार्नुभएको थियो । उहाँले आश्रम विगतका विखण्डनलाई छोडेर अब धेरै अगाडि बढिसकेको बताउनु भयो ।

कार्यक्रम दिनको ३:३० सम्म चलेको थियो । वार्षिकोत्सवमा सिद्धाश्रम शक्ति केन्द्र नेपालका काठमाडौं उपत्यकाभित्रका सम्पूर्ण सम्पर्क कार्यालय र आरती केन्द्रबाट उल्लेख्य साधकसाधिका तथा भक्तजनको सहभागिता रहेको थियो भने उपत्यका बाहिरको सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय गोरखाका साधकसाधिकाको पनि सहभागिता रहेको थियो ।

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) अवतरित हुनुभएको अंग्रेजी महिनाको २१ तारिखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत श्रावण ६ गते (July 21 तारिख) उक्त महोत्सवलाई हर्षोल्लासपूर्वक मनायो । बसुन्धरा आश्रममा आयोजित उक्त महोत्सवमा निखिल स्तवन, गोरक्ष स्तवनको सस्वर पाठ, गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरतीलगायत नृत्य आदि कार्यक्रमहरू सम्पन्न भएका थिए । कार्यक्रममा संस्थाको तर्फबाट सावरपन्थी सदस्य रामजी अर्यालज्यूले पूजन गर्नुभएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेको मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

श्रावण ७ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । श्रावण १ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । श्रावण २ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । श्रावण ३ गते बिहीबार– तान्त्रोक्त बगलामुखी हवन, बगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

त्यस्तै मासिक हवनकै क्रममा श्रावण २ गते बुधबार– तान्त्रोक्त विन्ध्य वासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे । श्रावण ३ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । श्रावण १ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे । श्रावण ५ गते शनिबार– तान्त्रोक्त बाघ भैरव हवन, बाघ भैरव मन्दिर, कीर्तिपुर, समय बिहान ८:००-९:०० बजे ।

## श्री शिवगोरक्ष महोत्सवअन्तर्गत विशेष हवन र भजनकीर्तन

श्री शिवगोरक्ष महोत्सवलाई दिव्यता र भव्यतापूर्वक मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत श्रावण महिनामा विविध कार्यक्रमहरूको आयोजना गर्‍यो ।

विगत वर्षहरूमा जस्तै श्रावण महिनामा गोरक्ष शक्तिपीठहरूमा विशेष हवन र भजनकीर्तन गरी यस महोत्सवलाई मनाइएको थियो । विशेष हवन सम्पन्न गर्ने क्रममा पशुपति मृगस्थली, पशुपति वनकाली, थापाथली र काष्ठमण्डपका गोरक्ष शक्तिपीठहरूमा प्रत्येक सोमबार विशेष हवन सम्पन्न भएका थिए । बिहान ८ बजेदेखि ९ बजेसम्म सम्पन्न उक्त विशेष हवनहरूमा थुप्रै श्रद्धालु भक्तजनहरूको उपस्थिति रहेको थियो ।

त्यस्तै बसुन्धरा आश्रममा दिउँसो ३ बजेदेखि भजनकीर्तनको आयोजना गरिएको थियो । श्रावण महिनाभरि उक्त भजनकीर्तन आयोजित गरिएको थियो । श्री शिवगोरक्ष महोत्सव मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रका विभिन्न सम्पर्क कार्यालयहरूमा विविध कार्यक्रमहरू पनि सम्पन्न भएका थिए ।

## गोदावरीको आठौं वार्षिकोत्सव तथा रोट अर्पण कार्यक्रम

ललितपुर जिल्लाको गोदावरीमा रहेको सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय गोदावरीको आठौँ वार्षिकोत्सव गत श्रावण ४ गते शुक्रबार मनाइयो । सद्‌गुरुदेवहरूको स्तुति वन्दनाबाट शुभारम्भ भएको उक्त वार्षिकोत्सवमा गुरु पादुका पूजन, हवन पनि सम्पन्न भएका थिए । आश्रममा बिहान ११:०० देखि अपराह्न ३ बजेसम्म चलेको थियो भने नित्य गुरु आरतीपश्चात् साँझ दीपावलिसमेत गरिएको थियो ।

यसैगरी श्री शिवगोरक्ष महोत्सवअन्तर्गत सम्पर्क कार्यालय ललितपुर र गोदावरीको संयुक्त आयोजनामा गोदावरीस्थित ओगरनाथ बाबाको श्रीचरणकमलमा रोट अर्पण गरिएको थियो । स्थानीय परम्पराअनुसार श्रावण २९ गते मंगलबारको दिनमा रोट अर्पण गरिएको थियो ।

# श्री शिवगोरक्ष महोत्सवमा सम्पन्न विशेष हवनहरू

श्री शिवगोरक्ष महोत्सवअन्तर्गत पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा विशेष हवन हुँदै

श्री शिवगोरक्ष महोत्सवअन्तर्गत पशुपति वनकालीस्थित गोरक्षपीठमा विशेष हवन हुँदै

श्री शिवगोरक्ष महोत्सवअन्तर्गत थापाथलीस्थित गोरक्षपीठमा विशेष हवन हुँदै

श्री शिवगोरक्ष महोत्सवअन्तर्गत बसन्तपुरस्थित गोरक्षपीठमा विशेष हवन हुँदै

म.क्षे.हु.नि.द.नं. २१/०७०/७१ का.जि.का.द.नं. ७०/०५६

परमपूज्य सद्‌गुरूदेवहरूको कृपा,
आशीर्वादस्वरूप यही कार्तिक ९ गते
**सावर महालक्ष्मी साधना शिविर**
सम्पन्न हुने भएकोले
सो शिविरमा भाग लिनका लागि
हार्दिक अनुरोध गर्दछौँ ।

**आजै नाम दर्ता गर्नुहोला ।**

**स्थान: ए.वि. पार्टी प्यालेस, सामाखुसी**
**समय: बिहान १० बजे ।**

सिद्धाश्रम शक्ति केन्द्र
बसुन्धरा, काठमाडौं ।